# गोरक्ष निखिल वाणी

आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक

चैत्र २०६७

## काली विशेष

www.gnv.org.np

सिद्धाश्रम शक्ति केन्द्र

॥ ॐ नमो गुरु मछिन्द्र शब्द साँचा पिण्ड काचा मेरा भक्ति गुरुका शक्ति नवनाथै जगाऊँ चौरासीनाथै जगाऊँ फुरो मंत्र ईश्वरो गुरु गोरख वाचा ॥

१-११ : गोरखामा सम्पन्न श्री श्री महायोगी गुरु गोरखनाथको सवाकरोड मन्त्रजप महाअनुष्ठान।

१२-१५ :महाशिवरात्रिको अवसरमा पशुपति वनकालीमा सम्पन्न कार्यक्रम।

● वर्ष १२ ● अङ्क ८ ● चैत्र २०६७ ● पूर्णाङ्क १४०


## सम्पर्क कार्यालयहरु


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**

काली विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

## जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## आश्रमका नियमित कार्यक्रमहरू

प्रत्येक साँझ ५ बजे गुरु आरती । प्रत्येक बृहस्पतिबार बिहान १० बजे गुरु पूजन । प्रत्येक अंग्रेजी महिनाको २१ तारीख दिव्य गुरु महोत्सव कार्यक्रम । प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीस्थित श्री श्री महायोगी गुरु गोरखनाथको मन्दिर प्रांगणमा श्री शिव गोरक्ष हवन, पहिलो मंगलबार लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधबार लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तान्त्रोक्त महालक्ष्मी हवन तथा पहिलो बिहीबार पाटन कुम्भेश्वरस्थित वगलामुखी मन्दिर प्रांगणमा तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम सञ्चालन । विभिन्न चाडपर्वहरूमा विशेष कार्यक्रम । गोरक्ष निखिल वाणी आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिकको प्रकाशन । विभिन्न एफ.एम. स्टेशनहरूमार्फत् गोरक्ष निखिल सन्देश रेडियो कार्यक्रम सञ्चालन । समाजमा आध्यात्मिक शिक्षा लागू गराउनका लागि गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको सञ्चालन । तान्त्रिक ध्यानका विभिन्न चरणका कक्षाहरू । समय समयमा विशेष साधना कार्यक्रमहरू । प्राणप्रतिष्ठित तान्त्रिक सामग्रीहरूको वितरण । समस्या समाधानका लागि परामर्श सेवा । असाध्य रोगका लागि तान्त्रिक हिलिङको व्यवस्था ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग
ssk.org.np, info@ssk.org.np

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, काठमाडौँ, नेपाल**
**फोन नं: ०१-४३८९१५४, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७** (CDMA Phone), URL: gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

यस केन्द्रको आयोजनामा हालै भव्य एवं दिव्य रुपमा तपास्यात्मक कार्यक्रमको रुपमा सवाकरोड मन्त्रजपको महाअनुष्ठान कार्यक्रम पूर्णरुपमा सफलतापूर्वक सम्पन्न गर्न यस केन्द्र सफल भएको छ । यस कार्यक्रमलाई सूक्ष्म सत्ताबाट कृपा, आशीर्वाद, अनुकम्पा प्रदान गरी सफल बनाउन अतुलनीय योगदान गर्नुहुने समस्त देवीदेवता, योगी महायोगी, नाथगुरुहरुप्रति नतमस्तक हुँदै कोटिकोटि नमन अर्पण गर्दछौं । त्यस्तै, यस कार्यक्रमको पूर्ण सफलता केवल सद्गुरुदेवहरुको कृपा, आशीर्वादले मात्र सफल हुने भएकोले सद्गुरुदेवहरुप्रति सदा सदा कोटि कोटि नमन अर्पण गर्दै उहाँहरुकै चरणमा विसर्जित हुने सौभाग्य प्राप्त होस् भनी प्रार्थना गर्दछौं ।

जीवनलाई सद्गुरुको माध्यमले मात्रै पूर्णतामा लैजान सकिन्छ । सद्गुरुको प्राप्तिपछि नै मानवजीवनलाई आफ्नो लक्ष्य अर्थात् मुक्ति, मोक्ष, बोधत्व, ईश्वर, परमात्मा प्राप्त हुन्छ । मानिसले आफ्नो सर्वांगीण विकास गर्ने क्रममा सद्गुरु मात्र यस्तो आधार हुनुहुन्छ, जसको आशीर्वादरुपी वरदहस्तको छत्रछायाँ पाएर मानवजीवन धन्य हुन्छ, अनन्त जन्मका लागि मानवयोनि सार्थक हुन्छ, अनन्तानन्त पापराशिबाट मुक्त भएर सौभाग्यको त्यस चरम छुन पुग्छ जसलाई पूर्णता भनिएको छ, कैवल्य भनिएको छ, जीवनमुक्तिको अवस्था भनिएको छ ।

हाम्रो प्रयास सधैं यस्तै जीवनमुक्तिको हुनुपर्छ, यस्तै कैवल्यतिरको हुनुपर्छ । यही संकल्प हुनुपर्छ भन्ने सद्गुरुहरुको सन्देश रहेको छ ।

यसपालिको अंकलाई 'काली विशेष'को रुपमा निकाल्ने कोशिस गरेका छौं । माता कालीको सम्बन्धमा यस अंकमा के नै खुलाउन सकिन्छ र ? तैपनि सानै रुपमा भए पनि उहाँको विषयमा केही खोतलखातल गरेका छौं । आगामी अंकहरुमा पनि माता कालीको सम्बन्धमा अझै खोजमूलक विषय आउने नै छ । यस 'काली विशेष' निकाल्ने क्रममा भए गरेका सम्पूर्ण गल्ती, कमी कमजोरीका लागि परमपूज्य सद्गुरुदेवहरुसँग र यहाँहरुसँग क्षमा माग्दै आवश्यक सल्लाह, सुझावको अपेक्षा राख्दछौं । अस्तु ।

परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरू गोरखनाथ

**मानव जीवनमा गुरुको सर्वथा उच्च स्थान मानिन्छ। गुरु प्राप्तिबिना मानव जीवन व्यर्थ छ। सम्पूर्ण शास्त्रको सम्यक् ज्ञान भए पनि, धन सम्पत्ति र रूप लावण्यले भरिपूर्ण भए पनि, समस्त प्रकारका सिद्धि, शक्ति र ऐश्वर्यले भरिपूर्ण भए पनि यदि गुरु प्राप्त भएको छैन भने मानिस अपूर्ण नै हुन्छ किनकि गुरुले नै संसार सागरबाट तारेर हामीलाई मोक्षको भागीदार बनाउनुहुन्छ, हामीलाई असीम आनन्दबाट तृप्त गरेर पूर्ण गरिदिनुहुन्छ। यसप्रकार पूर्णता, मुक्ति अनि अनगिन्ती सिद्धि र शक्ति प्रदान गर्नुहुने दुई सद्गुरुदेवहरूलाई सिद्धाश्रम शक्ति केन्द्रले धारण गरिरहेको छ। गुरुहरूको महिमा, गरिमा र परिचय कसले पो दिन सक्छ र ? तैपनि सामान्य जानकारीसम्मका लागि महान् गुरुहरूको संक्षिप्त परिचय दिएका छौँ–**

### परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज

*वन्दे नारायणं देवं सद्गुरुं निखिलेश्वरं।*
*ज्ञानामृतरसेनैव पूतं येनाखिलं जगत् ॥*

यस विश्व ब्रह्माण्डलाई भौतिक एवं आध्यात्मिकरूपले सन्तुलित राख्न प्रकृतिद्वारा निर्मित अद्वितीय तपस्थली नै सिद्धाश्रम हो । मानव जीवनको अन्तिम ध्येय यस सिद्धाश्रमका प्राणाधार परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज हुनुहुन्छ। आफ्ना गुरु स्वामी सच्चिदानन्दज्यूको आदेश शिरोपर गरी 'धर्मसंस्थापनार्थाय...'को शंखघोष गर्दै उहाँ सन् १९३५ अप्रिल २१ तारीखमा भारतस्थित राजस्थान प्रान्तको जोधपुरमा अवतरित हुनुभयो। वेदाध्ययनबाट शिक्षा शुरु गर्नुभएका उहाँको विवाह बाह्र वर्षको उमेरमा भगवती देवीसँग भयो। आफ्नो जीवन परिवारको लागि मात्र नभएर सम्पूर्ण समाजको लागि हो भन्दै विवाहपश्चात् उहाँले थुप्रै वर्ष हिमालयका गुफा, विकट कन्दरा र जंगलहरूमा संन्यास जीवन बिताउनुभयो। त्यसबेला उहाँले विभिन्न स्वामी, संन्यासी, योगी, तान्त्रिक, मान्त्रिक, आयुर्वेदाचार्यहरूसँग भेटेर विभिन्न विधामा आफूलाई निष्णात् बनाउनुभएको थियो। संन्यास जीवनपश्चात् पुनः गृहस्थमा फर्केर आफूले प्राप्त गरेको आध्यात्मिक ज्ञानलाई समाजमा फैलाउने कार्य गर्नुभयो। यसको लागि सयौं पुस्तकहरूको रचना गर्दै असंख्य शिविर सञ्चालन गरी साधना, प्रवचन र दीक्षाको माध्यमबाट शिष्य निर्माण प्रक्रियालाई जोड दिनुभयो। यसरी ज्योतिष, सामुद्रिक शास्त्रका सुविज्ञ ज्ञाता, तन्त्र-मन्त्रका अन्तिम नाम, आधुनिक धन्वन्तरि, सम्मोहन विज्ञानका मसीहा, कुण्डलिनी शक्तिका सहज व्याख्याकार, सूर्य विज्ञानका अपूर्व ज्ञानी, धुरन्धर रत्न चिकित्सक आदिका रूपमा उहाँ **डा. नारायणदत्त श्रीमाली**को नामबाट विश्वमा विख्यात् हुँदै महामहोपाध्याय, मन्त्र शिरोमणि, समाज शिरोमणि, जगद्गुरु आदिको संज्ञाले विभूषित हुनुभयो। आगामी गोरक्ष निखिल युग निर्माणको महायोजना आफ्ना शिष्यहरूको काँधमा सुम्पेर सन् १९९८ जुलाई ३ मा महाप्रयाण लिई उहाँ आफ्नो मूल स्थान सिद्धाश्रम फर्कनुभयो। हाल सद्गुरुदेवकै सूक्ष्म आदेश निर्देशनबमोजिम सिद्धाश्रम शक्ति केन्द्र यस महान् योजनामा कटिबद्ध छ।

### श्री श्री महायोगी गुरु गोरखनाथ

*अनन्त कोटि ब्रह्माण्ड गोरक्ष स चराचरम्।*
*दर्शनम् मुक्ति लाभं च तस्मै श्री गोरक्ष नमः ॥*

श्री श्री महायोगी गुरु गोरखनाथ सम्पूर्ण गुरुहरूमा महागुरु, सम्पूर्ण योगीहरूमा महायोगी, सम्पूर्ण नाथहरूमा महानाथ हुनुहुन्छ। महायोगी श्री श्री गुरु गोरखनाथ भगवान् शिवका सबैभन्दा महत्त्वपूर्ण र प्रमुख अवतारको रूपमा पूजित हुनुहुन्छ। योग मार्गको प्रचारको लागि भगवान् शिवले नै गोरक्ष रूप धारण गर्नुभएको हो। यसैले उहाँलाई श्री शिव गोरक्षको रूपमा आदर-सम्मान गर्ने गरिन्छ। गो शब्दको अर्थभित्र समाहित गाई, पृथ्वी, इन्द्रिय, आदि सम्पूर्णको रक्षा गर्ने गोरक्ष नै हुनुहुन्छ। श्रीमद्भागवत, नारदपुराण, स्कन्दपुराण, ब्रह्माण्डपुराण, शिवपुराण, शाक्तप्रमोद, गोरक्षगीता आदिमा उहाँको बारेमा उल्लेख भएको छ। विश्वको इतिहासलाई हेर्दा उहाँको प्राकट्य सयौं हजारौं वर्षको अन्तरालमा विभिन्न स्थानमा भएको पाइन्छ। यसबारे विभिन्न विद्वान्हरूले थुप्रै अनुसन्धान गरेका छन्। आमाको कोखबाट नभई आवश्यकता अनुसार आफै प्रकट हुनुहुने महायोगी अजर अमर कायायुक्त हुनुभएको कुरा स्पष्ट हुन्छ।

नेपालको सन्दर्भमा हेर्दा गोरखा राज्यको नामाकरण उहाँको नामबाट भएको पाइन्छ भने उहाँकै आशीर्वादबाट यो राष्ट्र कहिल्यै पराधीन बन्नु नपरेको गौरवशाली इतिहास रहेको छ। उहाँको ऋण चुकाउन पनि हामीले उहाँको भक्ति गर्नैपर्दछ। नाथपंथका अग्रज महानाथ गुरु गोरखनाथ नेपालका राष्ट्रगुरु हुनुहुन्छ। नेपालमा विभिन्न ठाउँमा उहाँका मठ-मन्दिरहरू छन् जस्तै गोरखाको गोरख गुफा, पशुपतिको मृगस्थली पीठ, हनुमानढोकाको काष्ठमण्डप आदि । सिद्धाश्रम शक्ति केन्द्रको अनुसन्धानअनुसार गुरु गोरखनाथ सर्वप्रथम यस धरतीमा वैशाख शुक्ल पूर्णिमाको दिन गोरखाको गोरख गुफामा प्रकट हुनुभएको थियो। नेपालमा मात्र नभएर विश्वभर उहाँको सम्प्रदाय, मन्दिर एवं मठहरू स्थापित छन्। आगामी गोरक्ष निखिल युग निर्माणको लागि गोरक्ष शक्ति जगाउँदै नाथ परम्परालाई समाजमा स्थापित गर्न सिद्धाश्रम शक्ति केन्द्र गतिशील छ।

# काली

यो विशाल विश्व ब्रह्माण्ड शक्ति र शक्तिमानको संयुक्त प्रयासबाट संचालित छ भन्ने शास्त्रीय कथन र विज्ञहरूको अनुभव छ। शक्ति शब्द स्त्रीलिङ्गी भएकोले त्यसबाट बोध हुने, बुझाइने व्यक्तिविशेष नारीरूपका मानिन्छन् भने शक्तिमान भनेर पुरुषरूप। शक्तिको स्वरूप एवं महत्ता कहाँ के के रूपमा भएको छ भनेर बुझ्न खोज्दा विश्वसाहित्यको पहिलो ग्रन्थ ऋग्वेददेखि नै भएको पाइन्छ।[१] शक्ति पुराणहरूमा देवीका बहुरूप र नाम उल्लेख भएका छन्। त्यस्ता नाम र रूपमा महाकाली, महालक्ष्मी र महासरस्वतीलाई प्रमुख रूप मानिएको छ। शक्तिका मूर्तरूप देवीलाई प्रकृति शब्दले पनि व्यवहार गरिन्छ। प्रकृतिको स्वरूप के हो त भन्दा सत्त्व, रज र तम तीन गुणको साम्यावस्थालाई नै प्रकृति भनिने हो।[२] सांख्य र योगदर्शनमा सृष्टिकार्यको संचालनका लागि प्रकृतिको प्रधानता मानिएको छ। शक्ति पुराणहरूमा सृष्टि गर्नमा जसको प्रमुखता छ त्यो हो प्रकृति, यस्तो पनि परिभाषा गरिएको छ।[३] त्रिगुणात्मक प्रकृतिबाट कुनै सत्त्वप्रधान, कुनै रज:प्रधान र कुनै तम:प्रधान सृष्टि विकास मानिएको छ। देवीका रूपहरूमा पनि सर्वशुक्लासरस्वतीलाई सत्त्वप्रधान, लक्ष्मीलाई रज:प्रधान र कालीलाई तम:प्रधान मानिएको छ। तमको रूप अन्धकारमय कालो भएकोले कालीको स्वरूप गाजलजस्तो कालो मानिन्छ। यस लेखमा कालीको स्वरूप, स्वभाव र प्रभावबारे संक्षिप्त चर्चा गरिन लागेकोले अब अगाडिको अंश त्यसबारे मात्र प्रकाश पार्ने प्रयास गरिन्छ।

कालिका पुराण कालीको चरित्र उल्लेख गर्नमा प्रमुख स्थान राख्ने उपपुराण हो। त्यहाँ कालीको उत्पत्तिबारे भनिएको छ– एकपल्ट देवताहरू असुर पक्षबाट आफूहरूलाई परेको पीरमर्का निवेदन गर्न हिमाली क्षेत्रमा पुगे। त्यो थियो मतङ्ग मुनिको आश्रम निकट। देवताले स्तुति गरेपछि प्रसन्न बनेकी देवीले तिमीहरू किन कसको स्तुति गरिरहेछौ ? यस्तो प्रश्न देवीले मतङ्ग वनिता बनेर गरेकी थिइन्। त्यस वनिता मूर्तिबाट कालो पहाडसमानको नारीमूर्ति प्रकट भयो। त्यसरी प्रकट नारीले जवाफ दिइन्, यी देवताहरू मेरै स्तुति गरिरहेछन्।

मार्कण्डेय पुराणअन्तर्गतको सप्तशतीमा पनि कालीको उत्पत्तिबारे लगभग यसैसित समता राख्ने

उल्लेख छ । शुम्भ, निशुम्भ आदि दानवबाट सताइएका, पीडित बनेका देवताले जब हिमाली क्षेत्रमा गई देवी सूक्तले स्तवन गरेका थिए । अनि पार्वतीको शरीरबाट कौशिकी नामकी देवी प्रकट भइन् । कौशिकीको प्रकटपछि पार्वतीको शरीर कालो बन्यो तब उनी काली बनिन् ।[४] यसरी सप्तशती र कालिका पुराणको कथनमा कालीको उत्पत्ति हिमाली क्षेत्र मानिएको छ । हिमाली क्षेत्रमा शिवको निवास र हिमालय पार्वतीका पिता भएकोले उत्पत्तिस्थल त्यो हुनु स्वाभाविक छ । काली शब्दको व्युत्पत्तिकाललाई संकलन गरेर खाइदिने, पचाइदिने आफू त्यसमा नपर्ने त्यस्तो बताइएको छ ।[५]

दक्षिणकाली, भद्रकाली, श्मशान काली, महाकाली, गुह्यकाली, कामकलाकाली, धनकाली, सिद्धिकाली, चण्डकालिकासमेत गरी कालीका नौ भेद मानिएका छन् ।[६] यी नौमा दक्षिणकालीलाई महाविद्या र अरूलाई सिद्धविद्या भनिएको छ । उत्तराम्नाय उपासकको मतमा गुह्यकालीलाई पनि महाविद्या भनिएको छ । सामान्यतया श्यामा र रक्ता गरी कालीका दुई रूप मानिएका छन् । त्यसमध्ये दक्षिणकालीको श्याम रूप भनिएको छ भने त्रिपुरसुन्दरीको रक्त रूप । गुह्यकाली र त्रिपुरसुन्दरीलाई अभेदरूप भनेर बताइएको छ । चण्डयोगेश्वरी भन्ने गुह्यकालीकै अर्को नाम हो । यहाँनिर याद गर्न लायक मनोरञ्जक कथन के छ भने धराधाममा विविधरूपले अवतीर्ण भएका नारीलाई कामोन्मत्त तुल्याउन कालीले वंशीधरकृष्ण रूप लिएको हो, त्यसैले कृष्ण र कालीमा अभिन्नता छ ।[७]

तन्त्रमार्गमा महाविद्या, सिद्धविद्या र क्षुद्रविद्या नामका

तीन भेद छन् । यिनमा पछिल्लो क्षुद्रविद्या मोक्ष मार्गको निरोधक अनि यसलोकमा मात्र फल दिने हुन्छ । काली, तारा, छिन्नमस्ता, बगला, मातङ्गी आदि महाविद्याका दश स्वरूप छन् । कालीको स्थान दश महाविद्यामा पनि पहिलो छ । कालीकै नीलस्वरूपलाई तारा भनिन्छ । साधक, भक्तलाई तार्न सहयोग गर्ने भएकोले यस्तो नाम रहेको हो । यी तारालाई नीलसरस्वती पनि भनिन्छ जसको उपासनाले विद्या प्रतिफलित बन्छ । दश महाविद्याका भैरव पनि दश छन् जसमध्ये कालिकाका महाकाल हुन् भने ताराका अक्षोभ्य, भुवनेश्वरीको महादेव, कमलाको नारायण, बगलामुखीको मृत्युञ्जय आदि । मन्त्रको पनि लिङ्ग मानिएको छ । त्यसअनुसार स्त्रीवाचक मन्त्र भोग्यवस्तु दिनमा प्रसिद्ध छ भने पुलिङ्गवाचक मन्त्र मोक्ष दिनमा । दुवैको मन्त्रले भुक्ति, मुक्ति दुवै मिल्छ ।

सिद्धविद्याअन्तर्गत कुन्जिका, चण्डिका, बाला, सिद्धिलक्ष्मी, सरस्वती, अन्नपूर्ण, गायत्री, पार्वती, अपराजिता, विन्ध्यवासिनी, यति दश मानिन्छन् । संसारको सृष्टि, स्थिति, लयमा शक्तिको सहयोग वा उपयोगिता के कस्तो छ भन्ने सम्बन्धमा भनिएको छ– शक्तिविनाको शिवको स्वरूप सुकेको रूखजस्तै हो, न फूल फुलाउन सक्छ न फल फलाउन न त छायाँ दिन ।[८] यसैगरी शिवविनाको शक्ति पनि निराश्रितरूपको केही गर्न नसक्ने हुन्छ । त्यसैले शिव र शक्तिलाई बीजाङ्कुरजस्तो भनिएको छ एकविना अर्कोको सत्ता सिद्ध नहुने ।

कालीको महत्त्व कहिले के रूपमा छ भन्ने सम्बन्धमा सत्य, त्रेता, द्वापर, कलि चारै युगमा सिद्धिविद्यारूपले प्रसिद्ध यी रानीरूप हुन् । यसअघि द्वापरमा मोहक कृष्णरूप लिने यिनै हुन् भनिएको थियो भने त्रेतामा रावण वधको लागि रामरूप लिने पनि उनै हुन्[९] भनिएको छ । राम मात्र नभएर शिवशक्ति, गौरीरूप अनि रामशक्ति, सीता र साम्राज्यको नायिका पनि उनै हुन् भनिएको छ । यसरी विभिन्न तन्त्रशास्त्रको छानविन गर्दा कालीको स्वरूप कति व्यापकरूपमा फिजिएको, फैलिएको रहेछ भन्ने बुझ्न सकिन्छ । यसभन्दा अगाडि बढ्दा के पनि भनिएको छ भने दानवी शक्तिको मर्दनको लागि जुन आद्याशक्ति तारा छन् तिनै महेश्वरी काली हुन् । अझ खासै भन्ने हो भने यिनमा लिङ्गभेद छैन ।

**त्रिगुणात्मक प्रकृतिबाट कुनै सत्त्वप्रधान, कुनै रजःप्रधान र कुनै तमःप्रधान सृष्टि विकास मानिएको छ । देवीका रूपहरूमा पनि सर्वशुक्लासरस्वतीलाई सत्त्वप्रधान, लक्ष्मीलाई रजःप्रधान र कालीलाई तमःप्रधान मानिएको छ । तमको रूप अन्धकारमय कालो भएकोले कालीको स्वरूप गाजलजस्तो कालो मानिन्छ ।**

कालीबारे यतिसम्मको संक्षिप्त चर्चापछि अब उनको स्वरूप तन्त्रशास्त्रहरूमा के कस्तो उल्लेख भएको छ त्यसको एक दिग्दर्शन गराइन्छ ।

'चामुण्डा शववाहना' भनेकोले उनको वाहन छ शव याने मुर्दा । कृष्णवर्णकी काली हेर्दाखेरी अत्यन्त भयङ्करकी देखिन्छिन् । लामा-लामा दाँत मुखभित्र मात्र नभई ओँठबाट बाहिर निस्केका दाँतसँगै जिब्रो पनि बाहिर निस्केको अनि चलायमान पनि छ, त्यस्तो भए पनि हंसमुख देखिन्छिन् । चार पुरुषार्थको प्रतिकको रूपमा उनका चार हात छन् । चार हातमध्ये तीनमा खड्ग, मुण्ड, अभय अनि वरद मुद्राको रूपमा छ । पचास संख्याको मुण्डको माला उनले धारण

गरेकी छन्, मशानमा रहने उनको रतिक्रीडा चल्दछ महाकालसित ।[१०] यो एक किसिमको रूप हो । यसभन्दा फरक रूप पनि शास्त्रमा उल्लेख भएको छ । कालीको स्वरूप यस किसिमको भयङ्कर किन भएको होला भन्ने कौतूहल वा जिज्ञासा पनि मनिसलाई लाग्न सक्छ । यो छोटो लेखमा विस्तारपूर्वकको उल्लेख त सम्भव छैन । तर छोटकरीमा भन्दा यी संहारकारिणी शक्ति हुन् । संहार सौम्यरूपले नभएर भयङ्कररूपले नै हुन्छ । यिनको वाहन शव हुनुको अर्थ छ संहार भएपछि सबै क्रियारहित शवरूप हुन्छन्, त्यसैले उनको वाहन शव भएको हो । मशानमा रहन्छिन् भन्नुको पनि त्यस्तै अर्थ छ । शक्तिमान शिव र शक्तिरूप काली दुवै मशानमा

**कृष्णवर्णकी काली हेर्दाखेरी अत्यन्त भयंकरकी देखिन्छिन् । लामा-लामा दाँत मुखभित्र मात्र नभई ओँठबाट बाहिर निस्केका दाँतसँगै जिब्रो पनि बाहिर निस्केको अनि चलायमान पनि छ, त्यस्तो भए पनि हंसमुख देखिन्छिन् । चार पुरुषार्थको प्रतिकको रूपमा उनका चार हात छन् । चार हातमध्ये तीनमा खड्ग, मुण्ड, अभय अनि वरद मुद्राको रूपमा छ । पचास संख्याको मुण्डको माला उनले धारण गरेकी छन्, मशानमा रहने उनको रतिक्रीडा चल्दछ महाकालसित ।**

रहेर कालको मुखमा परेपछि सबै बन्धु-बान्धवले छोडेकालाई यी आश्वस्त तुल्याउँछन् ।

कालीसहित अन्य शक्तिदेवीको पूजा, उपासनाको लागि दक्षिणाचार, वामाचार अनि कुलाचार गरी तीन विधि प्रसिद्ध छन् । यिनमा दक्षिणाचार विशेष गरी ब्राह्मणको लागि प्रसिद्ध छ । यसमा ऊनको आसन, रुद्राक्षको माला, मिलेसम्म पत्थरका पात्र, पायस अनि फलजस्ता नैवेद्य प्रयोग हुन्छन् । यसलाई सात्त्विक उपासना ठाने हुन्छ ।

वामाचारमा माला मृत व्यक्तिको दाँतले बनेको, पात्र पत्थर वा हड्डीबाट बनेको, आसन मृगचर्म, व्याग्र चर्म आदि, नारीको केशबाट बनेको बाला, मद्य र मांस पनि यसमा प्रयोग हुन्छ । यसलाई राजस, तामस विधि भनिन्छ र ब्राह्मणेतरका लागि वैध छ ।

कुलस्त्री, कुलगुरु, कुलदेवीको पूजा गरेर सम्पन्न गरिने कुलाचार विधि हो । यहाँनिर काली होस् या अन्य देवीको मन्दिर आदिमा पूजा गर्दा पशुबलि पनि गरिन्छ । यसरी पूजाजस्तो पवित्र विधि सम्पन्न गर्दा बलि चढाउनु उपयुक्त-अनुपयुक्त, ठीक-बेठीक के हो भन्ने प्रश्न वा जिज्ञासा व्यक्त गरेको सुनिन्छ । यसबारेको लामो बहस त यहाँ सम्भव छैन । भगवदगीतामा सात्त्विक, राजस र तामस गरी तीन किसिमका श्रद्धाको स्वरूप बताएर सात्त्विक श्रद्धालाई उत्तम मानिएको छ । यस किसिमको सात्त्विक श्रद्धाले गरिने पूजामा मांस, मद्यजस्ता आमिष वस्तुको प्रयोग हुँदैन । तर जसको श्रद्धा सात्त्विक नभएर राजस, तामस रूपको छ उसको आचार-विचार र खानपान पनि तदनुसार छ भने उसबाट सात्त्विक विधिको अवलम्बन कसरी सम्भव होला ? त्यसैले नगर्नुभन्दा राजस, तामस वस्तुले नै भए पनि गर्नु स्वाभाविक मानिएको छ । यो छोटो टिप्पणीपछि कालीको पूजा सबै वर्ण र जातिको लागि कर्तव्यरूप मानिएको छ । उनको पूजा उपासनाबाट हामी लाभान्वित बन्न सकौं । अन्त्यमा यति नै निवेदन गरिन्छ ।

जय गुरुदेव !

***सन्दर्भग्रन्थ***

१. *अहंरुद्रेभिर्वसुमिश्चराम्यहमादित्यैशदिं (ऋक्, वागाम्भृणि)*
२. *सत्त्वरजस्तमसां साम्यावस्था प्रकृतिः (सांख्यदर्शन)*
३. *सृष्टौ प्रकृष्टा या देवी प्रकृतिः सा प्रकीर्तिता (देवी भागवत ९-१)*
४. *तस्यां विनिर्गतायान्तु कृष्णाभूत् साऽपि पार्वती (सप्तशती)*
५. *काल संकलनातकालीकाल ग्रासंकरोत्यतः (कामधेनुतन्त्र)*
६. *काली नवविधा प्रोक्ता सर्वतन्त्रेषु.....*
७. *वंशीधरः कृष्णरूपं चाकरोद् द्वापरे युगे (महाकाल संहिता)*
८. *शक्तया विना शिवे शुष्केनाम धाम नविद्यते ।*
९. *दैत्य संहरणार्थाय पुंरूपं विभ्रतीपरम*
१० *शवारूढां महाभीमाङ्घोट दंष्ट्रां हसन्मुखीमृ श्मशानालयवासिनीम् । त्रीणि बीजानि दुर्गाया स्तदा चारास्त्रयः स्मृता (रुद्रयामल) । त्रिविधा भवति श्रद्धा देहिनां सा स्वभावज्ञा (गीता) ।*

# श्रीगुह्येश्वरी अथवा श्रीगुह्यकाली

–विद्यानाथ उपाध्याय भट्ट

**श्रीगुह्येश्वरीको अवस्थिति**

श्रीगुह्येश्वरीको मन्दिर नेपालको राजधानी काठमाडौँको पूर्वोत्तर कोणमा विद्यमान छ । त्यस मन्दिरमा श्रीगुह्येश्वरी भगवतीको कलश आकारको प्रतिमा र सँगै श्री भैरवको प्रतिमा पनि प्रतिष्ठापित गरिएको छ । वास्तवमा श्रीगुह्येश्वरीको कलशाकार प्रतिमा पनि यौटा जलको कुण्डलाई छोपेर राखिएको छ । यिनैको पूजा, उपासना भक्तहरू श्रद्धापूर्वक गर्ने गर्दछन् ।

यसैगरी काठमाडौँको उत्तरपट्टि बालाजुनजिकै पनि श्रीगुह्येश्वरीको मन्दिर छ । यहाँ केही उच्च पीठका प्रस्तर (ढुङ्गाको) कलश आकारको प्रतिमा छ । यसलाई पुरानो गुह्येश्वरी भनी प्रसिद्धि प्राप्त छ ।

काठमाडौँमै हनुमानढोकापरिसरमा महेन्द्रेश्वर महादेवको पश्चिमोत्तर कोणमा पनि सानो प्रस्तर युगल कलशाकार प्रतिमा प्रतिष्ठापित गरिएको छ । विभुलाई

पनि गुह्येश्वरीकै रुपमा पूजा गर्ने गरिन्छ ।

श्रीगुह्यकालीको ध्यानयुक्त प्रतिमा भने केवल यौटा मात्र भक्तपुर जिल्लाको लोहकिल्थली (लोकन्थली) मा दिव्येश्वरीका नामले प्रसिद्ध छ ।

### श्रीगुह्येश्वरीको इतिवृत्त

श्रीगुह्येश्वरीका सम्बन्धमा यौटा कथा प्रसिद्ध छ । पहिले सत्ययुगमा दक्ष प्रजापतिका तेत्तीस करोड कन्याहरूमा जेठी सतीदेवीको विवाह भगवान् शिवसँग भएको थियो । यो विवाह दक्षलाई मन परेको थिएन । यसैले उनी शिवको अपमान र निन्दा प्राय: गर्ने गर्दथे ।

एकपल्ट उनले यौटा यज्ञ गरे । यज्ञमा सबै देव-देवता, छोरी-ज्वाइँहरूलाई निम्ता दिइयो, तर शिव र सतीलाई भने बोलाइएन । यो कुरा थाहा पाएर सती अत्यन्त दु:खी भइन् । उनी पति शिवले रोक्दारोक्दै पनि पिताका यज्ञमा गइन् । त्यहाँ आफ्ना अगाडि आफ्नै पतिको अपमान पिताद्वारा भएको सुन्न नसकेर यज्ञकुण्डमा फाल हाली प्राणत्याग गरिन् । भगवान् शिव यो कुरा सुनेर अत्यन्त रिसाए र वीरभद्र एवं महाकालीलाई पठाई दक्षको यज्ञ विध्वंश गराए ।

त्यसपछि सतीदेवीको मृत शरीर काँधमा बोकी बहुलाजस्ता भएर यत्रतत्र हिँड्न थाले । यो देखी विष्णुले आफ्ना मायाले सतीका शरीरमा कीरा पारी यसलाई गलाइदिए । सतीका विभिन्न अङ्ग गल्दै एक एक गरी ठाउँ ठाउँमा खस्न थाल्यो । जहाँ खस्यो, त्यो यौटा शक्तिपीठ बन्यो, उपासनाको केन्द्र बन्यो । यसै क्रममा सबभन्दा पहिले नेपालमा सतीको गुह्य पतन भयो । त्यसैले यहाँ गुह्येश्वरी पीठ रह्यो ।

यो कथा स्कन्दपुराणको केदारखण्डमा छ भनी स्वस्थानी माहात्म्यमा लेखिएको छ । माघ-माहात्म्य नेपालका प्राय: हिन्दुहरूका घरमा माघ महिनामा भन्ने सुन्ने गरिन्छ ।

### पुराणहरूमा श्रीगुह्येश्वरीपीठ

श्रीगुह्येश्वरीपीठका विषयमा स्कन्दपुराणको हिमवत्खण्डमा (नेपाल माहात्म्यमा) पनि बडो महत्त्वपूर्ण प्रसङ्ग पाइन्छ । पहिले योगीश्वर राजा देवीदास योगीहरूका साथमा नेपालमा सिद्धपीठ, महापीठहरूको दर्शन गर्न आएका थिए । उनीहरूलाई देवीमय देखे । देवी गुह्येश्वरीको दर्शनसम्म पनि नगरी जान लाग्दा विघ्न पर्‍यो, उनीहरू शक्तिहीन भए । पछि उनीहरूले गुह्येश्वरीको उपासना गरी शक्ति प्राप्त गरे ।

यसमा भगवती पार्वती गुह्यालाई महाकालरात्रि, कृशाङ्गी (दुब्ली), कृष्णा, कमलवक्त्रा (डरलाग्दी) इकारादिरुपमा भद्रकाली आदि भनी स्तुति गरिएको छ । त्यहीं गुह्येश्वरीलाई मणिमय पीठमा विराजमान ज्ञानरुपा, ज्योतिर्मय श्रीगुह्यकाली भनिएको छ । उनैले पहिले श्लेषमान्तक वनलाई वरदान दिएकी थिइन् र आज पनि यो वन श्रीपशुपति र श्रीगुह्येश्वरीका परिसरमा फैलिएको छ ।

देवीभागवत, मेरुतन्त्र आदि ग्रन्थहरूमा पनि नेपालमा गुह्यकालीको महापीठ रहेको र यहाँ वाममार्गले पूजा अर्चना हुने सिद्धपीठ भएको चर्चा पाइन्छ ।

### श्री गुह्येश्वरीपीठ र आद्यशंकराचार्य

श्रीगुह्यकाली भगवतीसँगै जोडेर आदिशंकराचार्यका पिषयमा पनि भन्ने सुन्ने गरिएको यौटा किंवदन्ती छ । विश्वविजयका प्रसङ्गमा आदिशंकराचार्य नेपाल आउँदा उनी शक्तिहीन भएर बाटोमा लडे । जल पनि कमण्डलु उठाएर पिउन सकेनन् ।

त्यसैबेला यौटी बालिका प्रकट भएर कचौरामा खीर खान दिइन् । उनले 'मेरो शक्ति छैन, कसरी खाउँ' भने । यो सुनी बालिकाले हाँस्तै भनिन्– 'किन ? तिमी त शक्ति नमान्ने, आज शक्ति नभएको गुनासो किन गर्दछौ ?' यो सुन्नासाथ शंकरले बुझे । उनले भगवती गुह्याको दशवक्त्राको स्तुति गरे अनि शक्ति प्राप्त गरे । शंकरकृत गुह्यकालीको स्तुति पज्झटिका स्तोत्रका नामले प्रसिद्ध छ ।

### श्रीगुह्येश्वरी नामका अनेक अर्थ

गुह्येश्वरी वा गुह्यकालीको नामका पनि अनेकौं अर्थ छन् । गुह्य पतन भएकोले, गुह्य (रहस्यरुपा), गोप्य पूजाअर्चना हुने हुनाले, गुह्य (गूढ) स्वरुप भएकोले, गुह्य (मूलाधार चक्र) को अधिष्ठात्री भगवती भएकोले, गुह्यक भन्ने पर्वत कन्दरावासी जातिका सिद्धहरूले उपासना गरेकाले गुह्येश्वरी वा गुह्यकाली भन्ने नाम

भएको हुन सक्छ ।

गुह्येश्वरीमा भगवती कुब्जिकेश्वरी (पश्चिमाम्नायकी अधिष्ठात्री देवी) र गुह्यकाली (उत्तराम्नायकी अधिष्ठात्री देवी) को समष्टि (एकरुपता) गरिएको छ भन्ने कुरा गोरक्षसंहिता ग्रन्थमा स्पष्ट किटान गरिएको छ ।

गुह्यकालीका धेरै नाम छन् । सहस्रनाम (हजार नाम), अष्टोत्तरशतनाम (एकसय आठ नाम) प्रसिद्ध नै छन् । तिनीहरूमा पनि बाह्रवटा नाम महत्त्वपूर्ण छन्– गुह्यकाली, गुह्ययोगिनी, योगेश्वरी, महायोगश्वरी, महाकाली, काली, गुह्येश्वरी, सिद्धयोगिनी, महाचण्ड, योगिनी, सिद्धिकराली र चिच्चण्डा-गुह्यकाली । यिनीहरूले गुह्येश्वरीको वास्तविक स्वरुपप्रति इङ्गित गर्दछन् ।

## कालीहरूमा पनि विशिष्ट कालीका रूपमा श्री गुह्येश्वरी

गुह्यकाली उत्तराम्नायकी अधिष्ठात्री हुन् । दश महाविद्याहरू (काली, तारा, षोडशी, भुवनेश्वरी, भैरवी, छिन्नमस्ता, धूमावती, बगलामुखी, मातङ्गी र कमला (लक्ष्मी) मध्ये पहिलो महाविद्या काली हुन् । दक्षिणाम्नायका उपासकहरूले दक्षिणकालीलाई आद्य महाविद्याका रुपमा लिन्छन् भने उत्तराम्नायका साधकहरू गुह्यकालीलाई आद्य महाविद्याका रुपमा लिन्छन् ।

कलियुगमा काली विशिष्ट हुन्छिन् र यिनको उपासनाबिना मुक्ति सम्भव छैन भन्ने शास्त्रीय वचन छ । कालीहरूमा पनि गुह्यकालीलाई अझ विशिष्ट मानिएको छ । सालोक्य (गुह्याको दर्शन पाउनु), सामीप्य (गुह्यको नजिक पुग्नु, सारुप्य (गुह्याकै रुप ग्रहण गर्नु), सायुज्य, (गुह्यासँगै अभिन्न भएर मिल्नु) यी चारै मुक्तिहरू क्रमैसित गुह्यकालीको सच्चा आराधना गर्ने साधकले पाउँछन् । काललाई नियन्त्रित गर्ने, आफ्नो गाँस बनाइदिने, कालले कहिल्यै पनि प्रभावित गर्न नसक्ने बरु काललाई नै वशमा राख्ने हुनाले भगवतीको नाम काली भएको हो ।

## श्रीगुह्येश्वरीको उपासना

गुह्यकालीको निर्गुण र सगुण दुवैरुपमा उपासना हुन्छ । वास्तवमा गुह्यकाली त परब्रह्म नै हुन् । उनको नाम पनि छैन, रुप पनि । उनी त मन वचनबाट अगोचर (मनले कल्पनै गर्न नसकिने, वचनले वर्णनै गर्न नसकिने) तत्त्व हुन् । केवल साधकका हितका लागि ब्रह्मको नाम र रुपका कल्पना गरिन्छ, यसैगरी गुह्याको पनि भएको हो । उनको त सीमा नै छैन, अनन्त छिन् । उनी बालक, युवा, वृद्ध होइनन् । न स्त्री, पुरुष, नपुंसक केही हुन् । श्रीगुह्येश्वरीको जाति-गोत्र कुल पनि छैन । उनैबाट विश्व निस्कन्छ, उनैमा खेल्दछ र उनैमा लीन हुन्छ । गुह्या त सृष्टि, स्थिति, संहार, अनाख्या र भासा यी पाँचै कृत्यहरूको सम्पादन गर्दछिन् । उनको जन्म र मृत्यु केही छैन । नित्य, शुद्ध, बुद्ध, मुक्त, सत्य, ज्ञानरुपा गुह्यकाली परब्रह्म नै हुन् ।

## श्रीगुह्यकालीको सगुण स्वरूपको रहस्य

संसारको प्रत्येक चराचर वस्तु गुह्यकालीको विराट्विग्रह (स्वरुप) भित्र पर्दछ । तैपनि साधकले आफ्नो श्रद्धा र भक्तिले जुन स्वरुपको उपासना गरी सिद्धि प्राप्त गऱ्यो, त्यही उनको सगुण विग्रहका रुपमा प्रसिद्ध भयो । ब्रह्मा, विष्णु, शिव, वशिष्ठ, राम, शिरण्यकशिपु, कुबेर, यम, भरत, रावण, बलि, इन्द्र यस्तै अन्यान्य देवता, दानव, मानव जसले उनको जुन रुपको साधना गरी सिद्धि प्राप्त गऱ्यो, त्यही स्वरुप त्यसै साधकद्वारा उपासिता भनी प्रसिद्ध भयो ।

यसरी गुह्यकाली एकदेखि लिएर दशहजार मुखसम्म, भिन्न भिन्न भुजाहरू भिन्न भिन्न हतियारहरू, वर्ण, भूषण आदिले संयुक्त देखिन्छिन्, उनका मन्त्रहरू पनि भिन्न भिन्न छन् । यिनैका भेदले ध्यान पनि बेग्लाबेग्लै छन् । यौटी भगवती गुह्यकाली उपासनाका भेदले मन्त्रको विभिन्नताले स्वरुपको पनि विभिन्नता । यही गुह्यकालीको सगुण स्वरुपको रहस्य हो ।

## गुह्यकाली स्वरूपका अनेक भेद

गुह्यकालीको अनन्त भेदमध्ये भरतले उपासना गरिएकी दश मुख चवन्न हात भएकी गुह्यकाली विशिष्ट र प्रसिद्ध मानिएकी छिन् । ब्रह्मा, विष्णु, ईश्वर, महेश्वर र सदाशिव यी पाँच महाप्रेतहरू; सत्या, त्रेता, द्वापर र कलि यी चार युगहरू; ऋक्, यजु, साम र अथर्व यी चार वेदहरू; इन्द्र, अग्नि, यम, निर्ऋत, वरुण, वायु, कुबेर, ईश, ब्रह्मा र अनन्त यी दश दिग्पालहरूका शिरमाथि

भैरव, तिनीमाथि ज्योतिष्टोम, अग्निष्टोम, वाजपेय, षोडशी, चयन, पुण्डरीक, राजसुय, अश्वमेध, बार्हस्पत्य, विश्वजित्, नरमेध, सौत्रामणि, अर्धसावित्रि, सूर्यकान्त, अचलभिद्, गोमेध यी सोह्र यज्ञका प्रतीक सोह्रपाते कमल, त्यसमाथि श्याल, त्यसमाथि धर्म, ज्ञान, वैराग्य, ऐश्वर्य, यश, विवेक, काम र मोक्षका प्रतीक आठपाते कमल, त्यसभन्दा पनि माथि यी सबैलाई आसन बनाएर विराजमान भगवती दश मुख भएकी गुह्यकाली ।

श्रीगुह्यकालीका दशवटा मुखमा पनि सिंह, हात्ती, वँदेल, बाँदर, भालु, घोडा, गरुड (पक्षी), योगेश्वरी (तेज, ज्वाला), मकर (ग्राह) र मानवका मुखहरू अर्थात् पृथ्वी, जल, तेज, वायु, आकाशमा जहाँ जति पनि प्राणी छन् तिनका श्रेष्ठतमरुपका प्रतीक– सर्वमय भगवती गुह्यकाली। भुजामा पनि संक्षेपत: आठ भुजा तिनीहरूमा त्रिशूल, अंकुश, बञ्चरो, मुग्रो, पाश (डोरी), पात्र, खट्वाङ्ग र बालकको शिर । प्रत्येक आयुध बेग्लाबेग्लै वस्तुको प्रतीक, तर प्रत्येक आयुध साधकका कल्याणका लागि नै धारण गरेको। अथवा चवन्न भुजा, तिनीहरूमा पनि भिन्न आयुध छ ।

**श्रीगुह्यकालीको उपासना**

गुह्यकालीको उपासना त यौटा योग नै हो । योगका विधि जति पनि छन्, ती सबै तिनका उपासना विधि हुन्। वास्तवमा सम्पूर्ण इन्द्रियलगायतको मनचाहिँ साधक, विश्वका सम्पूर्ण भोग्य, अभोग्य वस्तुहरू उपचार (चढाइने वस्तु) र देवताचाहिँ आत्मस्वरुप गुह्यकाली यही गुह्याको निर्गुण साधना हो– सात्त्विक साधना ।

हुन् ।

मन-चन्दन, बुद्धि- फूल, देवतासँग आफ्नो एकता स्थापित गर्नु, धूप, आँखाको तेज- बत्ती, आफ्नो शरीर-नेवेद्य, प्रत्याहार-समाधि- प्राणायाम र धारणा यी योगका अङ्गहरू पाद्य-अर्घ्य-आचमनीय र स्नानीय अनादि महावाक्यहरू न्यास, यो पूजाविधि महाकालीसंहितामा वर्णित छ । ॐ तत् सत् (संसारको प्रत्येक वस्तु ॐकार स्वरुप हो त्यसैले सत्य हो ।), सोऽहमस्मि (त्यो सत्य वस्तु म नै हुँ), ब्रह्मऽहमस्मि (म ब्रह्म नै हुँ), तत्सत् अहमेव (त्यो सत् पदार्थ मदेखि बेग्लै होइन), अहमेवेदं सर्वम् (म नै यस ब्रह्माण्डमा सम्पूर्ण हुँ) ।

यी पाँच महावाक्यहरूको अनुभवात्मक ज्ञान उपासकमा हुनु नै गुह्यकालीको वास्तविक उपासना हो । जीव र आत्मा अनि जगत यौटै पदार्थ हुन्–भिन्न छैनन् । अज्ञानले गर्दा भिन्नजस्तै देखिन्छन् मात्र । पछि गुह्यकालीकै उपासनाले उनैको कृपाले अज्ञान निवृत्त भएपछि यौटै शाश्वत सत्य देखिन्छ त्यो हो श्रीगुह्यकाली । गुह्यकालीको निर्वाण, महानिर्वाण, परमनिर्वाण, निर्वाणातीत र अनि तुरीय, महातुरीय, परमतुरीय, तुर्यातीत यी चारवटा स्थितिको उपासना गुह्यकालीको दिव्य उपासना हो ।

**श्री गुह्यकालीको भावोपासना**

पशुभाव (आफूलाई अज्ञानी मानेर भगवती गुह्याकालीको उपासना गर्नु त्यो पनि द्वैतभावले), वीरभाव (भगवतीको उपासना स्वयं वीर बनेर उनैसित नै ऐक्य स्थापना गर्न खोज्ने उपासना), दिव्यभाव (गुह्यकालीदेखि अतिरिक्त वस्तु नै कुनै नदेख्नु) संक्षेपमा यी तीन भावहरूबाट गुह्याको उपासना हुन्छ । यसमा पनि आचारहरू– दक्षिणाचार, वामाचार, कुलाचार, पूजा प्रक्रिया, उपचार आदि आदिको विभिन्न तन्त्रग्रन्थहरूमा साङ्गोपाङ्ग वर्णन पाइन्छ। यिनीहरूको पूर्णज्ञानका निमित्त महाकालसंहिताको अध्ययन गर्नु आवश्यक छ ।

**श्रीकामकलाकाली र श्रीगुह्यकाली**

गुह्यकालीको अर्को स्वरुप कामकलाकाली हो। मन्त्र र ध्यानका भेदले यी दुईमा भिन्नता देखिन्छ तापनि तत्त्व दुवै यौटै हुन्, देवता यौटै हुन् । यी पनि 'अहम्' अर्थात् म– आत्मारुपमा नै हुन् । 'अ' प्रकाश र 'ह' विमर्श 'म्' दुवैको अभिन्नता वा समष्टि । प्रकाश-विमर्शात्मिका काली । 'अ' परमशिव, 'ह' पराशक्ति, 'म्' दुवैको अभिन्नता शिवशक्त्यात्मक गुह्यकाली ।

म– देवी गुह्यकाली नै हुँ, तिनी र ममा भेद छैन, म ब्रह्मस्वरुप छु, शोकले मलाई छुँदैन, सत् (त्रिकाल सत्य, सधैँ रहिरहने) चित् ज्ञानस्वरुप आनन्द (सुख र आनन्दको पराकाष्ठा) मै हुँ, म आत्मा हुँ भन्ने चिन्तन गुह्यकालीको साधना हो । त्यसको अनुभूति भक्तिको चरम परिणति मोक्ष ।

## नेपालमा श्रीगुह्यकालीको आविर्भाव

नेपालको गुह्येश्वरीपीठका सन्दर्भमा सतीदेवीको गुह्यपतन श्लेष्मान्तक वनमा भएपछि धेरै कालसम्म यो जलरुपमा गुप्त नै रह्यो । पछि नरसिंह ठाकुर नामका तान्त्रिक सिद्ध नेपालमा आउँदा उनलाई 'म गुह्या हुँ, मलाई प्रकाशित गर' भन्ने गुह्येश्वरीको स्वप्न भयो । उनले वनमा खोज्दै जाँदा एक ठाउँमा जलको सानो पोखरीमा भगवती गुह्याको दर्शन पाएर त्यहीं मन्दिर बनाई पूजा-उपासना गरेपछि लम्बकर्ण भट्ट (लक्ष्मीनारायण भट्ट) को सहायताले राजा प्रतापमल्लले पोखरीमा दलिन आदि हाली प्रस्तर प्रतिमाले कुण्डलाई छोपी देवप्रतिष्ठा गरे। अनि कालक्रमले पूजा-उपासनाको परम्परा चल्यो, चल्दै गयो । सबले आ-आफ्ना श्रद्धा र शक्तिअनुरुप प्रतिमा, मन्दिर, परिसर सजाउँदै गए । राजाप्रजा, स्वदेशीविदेशी सबैका शक्तिका केन्द्र वर्तमान गुह्येश्वरीको मन्दिर हो ।

## नेपालका राजाहरूद्वारा आराधित श्रीगुह्येश्वरी

राजा जगज्जय मल्लले तुलजा भवानीमा रहेको सोही आकारको कलश र भैरवको प्रतिमाको मार्गकृष्ण दशमीका दिन यात्रा गरी रातभरि गुह्येश्वरीको वर्तमान प्रतिमा रहेका स्थानमा राखी पूजा गरिन्छ । यसबाट तुलजा र गुह्येश्वरीको सम्बन्ध घनिष्ट भएको बुझिन्छ। यो प्रसङ्ग अनुसन्धेय छ ।

नेपालका राजाहरूले गुह्यकालीको पूजा-उपासना राजोपचारले गरेको, विभिन्न समयमा पुरश्चरणहरू भएको इतिहास सिद्ध छ । विशेष चौध वक्त्रको अमृतरुपमा गुह्यकालीको उपासना राजसी शानले गर्ने गरिएको देखिन्छ। यसैले गुह्येश्वरी/गुह्यकाली, तुलजा, देगुन्तले यी देवताको शास्त्रीय अनुसन्धानपूर्ण अध्ययन आवश्यक छ। हाल गुह्यकालीको पूजा नित्य, नैमित्तिक दुवै कर्माचार्यहरू जो दीक्षित छन्, गर्ने गर्दछन्। यसका निमित्त विभिन्न गुठी छन् ।

## हिन्दु र बौद्धहरूकी समानरूपमा आराध्या श्रीगुह्यकाली

गुह्येश्वरीको मान्यता केवल हिन्दु सनातनीहरूमा मात्र होइन, बौद्ध (महायानी योगिनीहरू– खड्गयोगिनी, वज्रयोगिनी, आकाशयोगिनी र नैरात्म्ययोगिनीमध्ये गुह्यकालीलाई नैरात्म्ययोगिनीका नामले पनि बौद्ध महायानीहरू उपासना गर्दछन्। बौद्ध महायान दर्शनमा आत्माभन्दा माथिको अवस्था नैरात्म्य छ । यसैकी अधिष्ठात्री गुह्यकाली हुन् भन्ने मानिन्छ ।

नित्य पूजनका अतिरिक्त प्रत्येक अष्टमी, पूर्णिमा, चैत्र र आश्विनका नवरात्रहरूमा गुह्यकालीको विशेष नैमित्तिक पूजा हुन्छ । गुह्यकालीकै उपासनाले भक्तजनहरू गुह्यकालीको श्रद्धापूर्वक दर्शन गर्दछन् ।

गुह्यकालीको निर्गुण एवं सगुनस्वरुपको विस्तृत वर्णन, उपासनाविधि प्रक्रियाहरू, योगका तह (स्थितिहरू) उपहार, सामग्रीहरू र उनका मन्त्र, ध्यान, न्यास आदि सबै तन्त्रहरूमा वर्णित छन्। गुह्यकालीको मन्त्र, मण्डल आदि गोप्य र गुरुमुखबाट मात्र जान्नुपर्ने हुनाले दीक्षा लिएर मात्र विधिपूर्वक साधना गर्नुपर्दछ। अन्यथा विघ्न पनि पर्न सक्दछ भन्ने शास्त्रीय वचन छ ।

## श्रीगुह्यकालीको प्रतिपादक ग्रन्थ

गुह्यकालीसम्बन्धी मान्यता प्राप्त तन्त्रग्रन्थ हो– महाकालसंहिता। यो हाल प्रकाशित छ। अहिलेसम्म तीन खण्डहरूमा गङ्गानाथ रिसर्च इन्स्टिच्युटबाट प्रकाशमा ल्याएको छ। यो ग्रन्थ पूर्ण संस्कृतमा छ। अन्यान्य पूजा पद्धति स्तोत्र आदि विभिन्न प्रकीर्ण तन्त्रग्रन्थहरूमा पनि हेर्न सकिन्छ ।

## निष्कर्श :

नेपालमा गुह्यकालीको उपासनाको परम्परा ब्राह्मण र नेवार दुवै जातिमा रहेको छ । सात्त्विक, राजस र तामस तीनै प्रकारका उपासना आ-आफ्ना परम्पराअनुरुप दीक्षा लिएर मात्र गरिने गरिन्छ। वास्तवमा सिद्धविद्याको रुपमा गुह्यकालीको विद्यालाई मान्यता प्राप्त छ ।

गुह्यकालीको विद्या योगविद्या भएकोले गूढ र गहन छ। पद्धतिहरू अनेकौं छन्। मन्त्र र पूजा प्रक्रिया पनि भिन्न भिन्न छन् । यो ज्यादै रहस्यात्मक छ । परम्पराअनुरुप दीक्षित गुरुबाट स्वयं दीक्षित भएरै मात्र यिनको तान्त्रिक उपासना गर्ने अनुमति प्राप्त छ। अन्य भगवती करुणामयी माताका रुपमा पूजा, भक्तिचाहिँ सर्वसम्मत सुलभै छ। जय गुरुदेव !

# श्रीकाली शतनाम स्तोत्रम्

॥ शिव उवाच ॥

ॐ करालवदना कालीं कामिनी कमलालया ।
क्रियावती कोटराक्षी कामाक्षा कामसुन्दरी ॥१॥
कपोला च कराला च काशी कात्यायनी कुहूः ।
कङ्काली कालदमनी करूणा कमलार्चिता ॥२॥
कादम्बरी कालहरा कौतुकी कारणप्रिया ।
कृष्णा कृष्णप्रिया कृष्णपूजिता कृष्णवल्लभा ॥३॥
कृष्णाऽपराजिता कृष्णप्रिया च कृष्णरूपिणी ।
कालिका कालरात्रिश्च कुलजा कुलपण्डिता ॥४॥
कुलधर्मप्रिया कामा काम्यकर्म विभूषिता ।
कुलप्रिया कुलरता कुलीन परिपूजिता ॥५॥
कुलज्ञा कमला पूज्या कैलाशनगभूषिता ।
कुटजा केशिनी कामा कामदा कामपण्डिता ॥६॥
करालास्या च कन्दर्पकामिनी कामशोभिता ।
केलिप्रिया केलिरता केलिनी केलिभूषिता ॥७॥
केशवस्य प्रिया केशा काश्मीरा केशवार्चिता ।
कामेश्वरी कामरूपा कामदान विभूषिता ॥८॥
कामहंत्री कूर्ममांसप्रिया कूर्मादि पूजिता ।
केलिनी करकी कारा करकूर्म्म निषेविनी ॥९॥
कटकेशरमध्यस्था कटकी कटकार्चिता ।
कटप्रिया कटरता कटकूर्म्म निषेविनी ॥१०॥
कुमारी पूजनरता कुमारीजनसेविता ।
कुलाचार प्रिया कौलप्रिया कुलनिषेविनी ॥११॥
कुलीना कुलधर्मज्ञा कुलभीति-विमर्दिनी ।
कामधर्मप्रिया कामा नित्याकामस्वरूपिणी ॥१२॥
कामरूपा कामहरा काममन्दिरपूजिता ।
कामागारस्वरूपा च कामाख्या कामभूषिता ॥१३॥
क्रियाभक्तिरता कामा काञ्चिनी चैव कामदा ।
कोलपुष्पाम्बरा कोला निष्कोला कलहान्तिका ॥१४॥
कौषिकी केतिकी कुम्भी कुन्तिला दिविभूषिता ।
इत्येवं श्रृणु चार्वाङ्गि रहस्यं सर्व मङ्गलम् ॥१५॥
यः पठेत् परमा भक्त्या स शिवो नाऽत्र संशयः ।
शतनामप्रसादेन किं न सिध्यन्ति भूतले ॥१६॥
ब्रह्माविष्णुश्च रुद्रश्च वासवाद्या दिवौकसः ।
सहस्रपठनाद्देवि सर्वे च विगतज्वराः ॥१७॥
नास्ति नास्ति महामाये तन्त्रमध्ये कथञ्चन ।
कृपया च विना देवि विना भक्त्या महेश्वरी ॥१८॥
प्रसन्ना स्यातू करालास्या स्तवपाठाद्दिगम्बरा ।
सत्यं वच्मि महेशानि अतः परतरं न हि ॥१९॥
न गोलोके न वैकुण्ठे न च कैलाश मन्दिरे ।
अतः परतरा विद्या स्तोत्रं कवचमेव च ॥२०॥
त्रिलोकेषु जगद्धात्री नास्ति नास्ति कदाचन ।
रात्रावपि दिवाभागे सन्ध्यायां वा सुरेश्वरी ॥२१॥
प्रजपेत् भक्तिभावेन रहस्यं स्तवमुत्तमम् ।
शतनामप्रसादेन मन्त्रसिद्धिः प्रजायते ॥२२॥
कुजवारे चतुर्दश्यां निशाभागे पठेत्तु यः ।
स कृती सर्वशास्त्रज्ञः स कुलीनः सदा शुचिः ॥२३॥
सकुलज्ञः सकालज्ञः स धर्म्मज्ञो महीतले ।
प्राप्नोति देवदेवेशि सत्यं परम सुन्दरी ॥२४॥
स्तवपाठाद् वरारोहे किं न सिध्यन्ति भूतले ।
आणिमाद्यष्टसिद्धिश्च भवत्येव न संशयः ॥२५॥
रात्रौ बिल्वतलेऽश्वत्थमूले ऽपराजितातले ।
प्रपठेत् कालिकास्तोत्रं यथाभक्त्या महेश्वरी ॥
शतवार प्रपण्नान्मंत्रसिद्धिं भवेद्धध्रुवम् ॥२६॥
॥ इति श्री कालीशत नामस्तोत्रं सम्पूर्णम् ॥

# गोरखकाली मन्दिर

गोरखा जिल्लाको सदरमुकाम गोरखा बजारदेखि करिब ४-५ किमिको कच्ची सडक यात्राबाट प्राचीन ऐतिहासिक गोरखा दरबार पुग्न सकिन्छ। यो शाहवंशीय गोर्खाली राजाहरूको दरबार हो । यहीँ राष्ट्रनिर्माता पृथ्वीनारायण शाहको जन्म भएको थियो। यसै दरबारसँगै भगवती गोरखकालीको मन्दिर अर्थात् गोरखकाली दरबार रहेको छ ।

गोरखकाली दरबारको भित्रपट्टिको पूजाकोठामा महाशक्ति गोरखकाली माताको विशेष पूजाकोठा छ । यसमा नै पूजारीहरूद्वारा विशेष पूजाआजा गर्ने गरिन्छ। महाशक्ति गोरखकाली माता विराजमान हुनुभएकोले यस दरबारलाई गोरखकाली दरबार वा मन्दिर भन्ने गरिन्छ। मूलद्वारको रूपमा दुईवटा कलात्मक ढोका रहेको यस दरबारमा आउने भक्तहरूले यसै ढोकामा महाशक्ति गोरखकाली मातालाई सम्झेर पूजा, आराधना गर्ने गर्दछन् । यी ढोकाहरूमा नै भक्तजनले आफूले ल्याएको पूजा सामग्रीबाट पूजा गर्ने, धूप दीप बाल्ने, नरिवल फुटाउने आदि गर्दछन् । भगवान् भावनामा बस्छन् ।

प्रत्यक्ष देवीको रूपमा रहनुभएकी महाशक्ति गोरखकाली माता सर्वव्यापक हुनुहुन्छ । यसप्रकार बाहिरी ढोकामा नै पूजा गरी भक्तहरूले माताको कृपा पाइरहेका छन्, आफ्नो इच्छित मनोकामना पूरा गरिरहेका छन् ।

यी दुईवटा ढोकाबाट भित्र पसेपछि खुल्ला ठाउँ छ । देब्रेतिर पण्डित बसेर पाठ गर्ने स्थान छ भने दायाँपट्टि एउटा ढोका छ जहाँबाट भित्र छिरेपछि महाशक्ति गोरखकाली माताको मुख्य पूजास्थल छ । त्यहीं माता विराजमान हुनुहुन्छ । यस ठाउँमा केवल माताका पूजारी र नेपालका राजारानी जान पाउने प्रावधान छ । प्रत्येक अष्टमी, अझ विशेष गरेर चैत्र शुक्ल अष्टमी र बडादशैंको नवरात्रिमा यहाँ विशेष पूजा हुन्छ र बलि दिनेहरूले बलि पनि चढाउने गर्दछन् ।

महाशक्ति माता गोरखकालीको दिव्य दरबारमा प्रत्येक अष्टमीमा विशेष पूजा, सप्तचण्डी पाठ, सामवेदको पाठ आदि हुने गर्दछ । दैनिकरूपमा नित्य पाञ्चायन पूजा हुने गर्दछ ।

इतिहासलाई केलाउँदा यशोब्रह्म शाहका कान्छा छोरा राजा द्रव्य शाहले गोर्खाको राज्यलाई जितेपछि गोरखामा आउँदा आफ्ना पितापुर्खाले पनि इष्टदेवीको रूपमा कालीलाई मानेको कारण उहाँले पनि लिगलिगबाट लमजुङ कालिकालाई गोरखा ल्याउँदा दुलेनकोट (हालको चिल्ड्रेन पार्क भएको ठाउँ) मा आउँदा उडेर माथिल्लो दरबारमा गई बसेको कारण त्यहीं राखी पूजाआजा गरेको र गोर्खामा राखिएकोले गोरखकाली भनी आदर सम्मान गरेको उल्लेख पाइन्छ ।

त्यस्तै राजा राम शाह र पर्वतका राजा नारामलले पर्वतको ताकम्मा लगभग छ महिना तपस्या गर्दा माता खुशी भई नारामल राजाको हातमा पादुका र राजा राम शाहको हातमा शालिग्राम अर्थात् लक्ष्मीनारायण प्रदान गर्नुभयो । कालीगण्डकीको विशेष कालो रङको ढुङ्गा अर्थात् शालिग्राम राजा राम शाहले ल्याई कालिकाको स्थानमा राखी पूजा गर्ने गरेको कारण पनि महाशक्ति गोरखकालीको रूपमा मानेको कुरा उल्लेख पाइन्छ ।

माताको कृपा, आशीर्वाद हामीले उहाँको भक्ति गर्नाले प्राप्त गर्न सक्दछौं । भक्तको श्रद्धा, भक्तिबाट छिट्टै खुशी हुने माता भक्तवत्सल हुनुहुन्छ । शुद्ध भावनाले उहाँलाई स्मरण गरेर उहाँको ढोकामा पूजा गर्दा माता खुसी हुनुहुन्छ भन्ने विश्वास गरिन्छ । धेरैले मातासँग भाकल गरी अष्टमीमा बोकाको बली दिने गर्दछन् तर माता बलि चढाउँदा खुसी हुनुहुने होइन । मातालाई त हाम्रा आन्तरिक शत्रुहरू काम, क्रोध, लोभ, मोह, घमण्ड, अहङ्कार आदिको बलि चढाउनुपर्ने हुन्छ । जति मन पवित्र हुन्छ, जति हृदय सफा हुन्छ, माताको कृपा, आशीर्वाद पनि उति नै छिटो प्राप्त गर्न सकिन्छ ।

# भद्रकाली

काठमाडौं उपत्यकाको टुँडिखेलको दक्षिणतर्फ चारैतर्फबाट बाटोले घेरिएको ढिस्कोमा अवस्थित भद्रकाली मन्दिर भगवतीको एउटा शक्तिपीठ हो । यो पीठ रूखको छहारीमा अष्टमातृकायुक्त धातुको चँदुवाले बनेको छ । मन्दिरको तोरणमा धातुको मोलम्बा लगाइएको छ । यहाँका देवता भद्रकाली सादा प्रस्तरको एक भावनात्मक शिलारुप हुन् । यहाँ तान्त्रिक पद्धतिअनुसार देवीको पूजा हुन्छ र वज्राचार्य गुभाजू यहाँका पुजारी हुन्छन् । यहाँ भद्रकालीलाई चामुण्डादेवीको रुपमा पूजा गर्ने चलन पनि छ । भद्रकालीका अन्य रुपहरू पनि भएको कुरा शास्त्रमा उल्लेख छ ।

**जयन्ती, मंगला, काली, भद्रकाली, कपालिनी**
**दुर्गा क्षमा शिवा धात्री स्वाहा स्वधा नमोऽस्तु ते ॥**
(दुर्गा कवच, अर्गलास्तोत्रम्)

यसरी भद्रकालीलाई अरू नामबाट पनि स्तुति गरिन्छ । देवीको पीठ हुँदा यहाँ बलि पनि चढाइन्छ ।

मन्दिरपरिसर निकै रमणीय छ । यहाँ अन्य देवीदेवताका मूर्तिहरू पनि छन् । अलिकति पर उत्तरतर्फ सानो गणेशको मन्दिर छ, यसमा चतुर्बाहु गणेशको भव्य प्रस्तरमूर्ति रहेको छ । मन्दिरवरिपरि सत्तल र पाटीहरू छन् । घोडेजात्रा यहाँको विशेष पर्व हो । यहाँ वर्षमा बाह्रवटा पर्वहरू पनि मनाइन्छन् ।

दशैंको नवरात्रमा भद्रकाली माताको विशेष पूजा हुन्छ । दर्शनार्थीहरूको ठूलो भीड लाग्ने गर्छ । वि.सं. १७२९ र वि.सं. १८०४ का लालमोहरसम्बन्धी अभिलेखअनुसार मन्दिरको अस्तित्व निकै पुरानो हो भन्ने बुझिन्छ ।

# दक्षिणकाली

काठमाडौँ उपत्यकाको दक्षिणी भागमा रहेको दक्षिणकाली मन्दिर भगवतीको एक शक्तिपीठ हो । दुई खोलाको मिलनबिन्दुको खोंचमा पर्ने प्राकृतिक सुन्दरताले पूर्ण वनजंगलको डाँडाको फेदीमा यो मन्दिर अवस्थित छ । मोटरगाडीहरू पार्क गर्ने ठाउँबाट ओर्लेर अलिकति पैदल मार्ग हिँडेपछि राम्रा ढुंगे सिंढीहरूबाट तल उत्रँदै गर्दा मन्दिरपरिसर पुगिन्छ ।

काली आद्याशक्ति भगवती हुन् । काठमाडौँ उपत्यकाको दक्षिणतर्फ यिनको पीठ रहेकाले यिनलाई दक्षिणकाली भनिएको हो । खोलाको किनारामा पुलबाट पार गर्नासाथ पश्चिमतटमा कालीमाताको मन्दिर पीठ आउँछ । पर्खालले घेरिएको प्रस्तुत शक्तिपीठ काली मन्दिरको छाना धातुबाट निर्मित कलात्मक नागपासले सजिएको चँदुवा निकै भव्य एवं मनोरम देखिन्छ। मन्दिर प्रांगणको भुइँ संगमरमरले छापिएको हुँदा सफा र सुन्दर छ। मन्दिरमा कालो शालिग्रामी शिलाको भगवती कालीको मूर्तिका साथै सप्तमातृका, कुमारी, महेश्वरी, वैष्णवी, वाराही, इन्द्रायणी, नारसिंही, चामुण्डा, गणेश, कुमार र भैरवका शिलाहरू पनि राखिएका छन्। यहाँ सङ्लो पानी सलल बगिरहने खोलाको सँगै रहेको मन्दिरपरिसरमा पाटी र सत्तलहरू पनि छन् । प्राचीनकालदेखि नै भगवतीको थानको रुपमा पुजिँदै आएको यो एक अति पवित्र ठाउँ भए पनि चौधौँ शताब्दीतिर भगवती माता काली स्वयंले राजा प्रताप मल्ललाई सपनामा मन्दिर बनाउन लगाएको हुँदा सोहीबमोजिम मन्दिर बनाई मूर्ति स्थापित गरी दक्षिणकालीको नामबाट प्रस्तुत शक्तिपीठ प्रसिद्धिमा आएको हो भन्ने मान्यता रहेको छ। तान्त्रिक र वैदिक दुवै विधिबाट माताको यहाँ नित्य पूजा हुन्छ । दुर्गासप्तशती चण्डीपाठ लगाइन्छ, बलि चढाइन्छ। यहाँकी देवीको प्रत्यक्षतामा अगाध जनविश्वास रहेको पाइन्छ ।

प्रस्तुत कालीमन्दिरबाट अलिकति माथि सिँढीहरू उक्लँदै जाँदा डाँडाको काखमा कालिकादेवीकी आमाको भनिने एउटा सानो मन्दिर छ । यहाँ पनि दर्शनार्थीहरू जान्छन् र देवीको पूजा दर्शन गर्छन् ।

दक्षिणकाली मन्दिरमा दर्शनार्थीहरूको सदैव भीड लाग्ने गर्छ तापनि प्रत्येक शनिबार र मंगलबार विशेषरुपले भीड हुन्छ । यी दिनहरूमा पूजा दर्शन

गर्ने गर्नेहरूको मेला जात्राजस्तै नरनारीको घुइँचो लाग्ने गर्छ । काठमाडौँ उपत्यकाका भगवतीपीठहरूमा दक्षिणकालीमा जति धेरै बलि चढाउने गरेको देखिँदैन । यो ठाउँ वनभोजका लागि पनि उत्तम रमणीय स्थल भएकाले मनोरञ्जनका निम्ति जाने युवायुवतीहरूको पनि यो क्षेत्र आकर्षणको थलो हुन गएको छ ।

यथार्थमा दक्षिणकाली काठमाडौँ उपत्यकाको अत्यन्त प्रसिद्ध एक शक्तिपीठ हो । कालिकादेवीको वर्णन देवीभागवत, पुराण, कालिकापुराण एवं सप्तशतीचण्डी आदि ग्रन्थहरूमा विशेषरुपले उल्लेख भएको पाइन्छ । विष्णु भगवान्को नाभिकमलदेखि उत्पन्न भएका बाल ब्रह्माजीले मधु र कैटभ नाम गरेका दानवहरूबाट त्राण पाउन भगवती कालीको स्तुति गरी भयंकर कठिनाइबाट मुक्ति पाएका थिए । त्यस्तै शुभ, निशुम्भ दैत्यसितको संग्राममा चण्ड, मुण्ड नाम गरेका असुरहरूलाई नाश गरी देवताहरूलाई रक्षा गर्ने काली भगवती थिइन् । पहिले पार्वतीको रुपमा हिमालय पर्वतबाट प्रकट भएकी भगवतीले प्रस्तुत युद्धको समयमा कालीको रुप धारण गरेकी हुनाले यिनलाई कालिकादेवी भनिएको हो भन्ने शास्त्रमा उल्लेख भएको पाइन्छ ।

**तस्यां विनिर्गतायान्तु कृष्णाभूत् सापि पार्वती**
**कालिकेति समाख्याता हिमाचलकृताश्रया ॥**

(दुर्गासप्तशती, अध्याय ५, ८८)

यसरी दक्षिणकाली भगवतीको ठूलो महिमा रहेको छ । यिनको दर्शन पूजन गर्नाले सुखशान्ति र ऐश्वर्यको अभिवृद्धि हुनुका साथै परलोकमा सद्गति मिल्ने कुरामा विश्वास गरिन्छ ।

# दन्तकाली मन्दिर

सुनसरी जिल्ला धरान बजारको सिरान प्राकृतिक सुन्दरताले युक्त सेउती खोलाको मुहाननजिक विजयपुर डाँडाको उत्तरतर्फ दन्तकालीपीठ रहेको छ। यस क्षेत्रमा पिण्डेश्वरी, पञ्चकन्या र बूढासुब्बाका मन्दिरहरू पनि रहेका छन् ।

पञ्चकन्या सेनवंशीय राजाहरूले पूजा गर्ने एउटा भावनात्मक पीठिका हो । जंगलको बीचमा रूखका छहारीमा देउरालीजस्तो पूजास्थल रहेकोमा केही वर्षअघि टिनको छाना भएको एउटा सानो मन्दिर बनाइएको छ। मन्दिरभित्र एउटा माटाको ढिस्को छ, यसैलाई प्रतीकात्मक पञ्चकन्यादेवीको रुप मानी पूजा गर्ने चलन छ। शास्त्रमा पञ्चकन्याका नाम यसप्रकार उल्लेख गरिएको छ–

**अहल्या, द्रौपदी, तारा, कुन्ती, मन्दोदरी तथा**
**पञ्चकन्याः स्मरेन्नित्यं महापातकनाशनम् ॥**

**दन्तकालीपीठ**

यहाँ रहेका भगवती पीठहरूमा दन्तकाली एक प्रसिद्ध शक्तिपीठ हुन् । जनश्रुतिअनुसार यहाँ सतीदेवीका दाँत खसेका हुनाले प्रस्तुत पीठको नाम दन्तकाली रहन गएको हो । यहाँ दन्तकालीको गुम्बज आकारको राम्रो मन्दिर छ । मन्दिरमा तामाको सुन्दर गजुर रहेको देखिन्छ ।

प्रस्तुत मन्दिरमा दन्त अर्थात् पाँच दाँतका प्रतीकात्मक शिलाहरू दन्तकाली भनी पूजा गरिन्छ । मन्दिरको विशाल आँगनमा घण्टहरू झुण्ड्याइएका छन् । यिनमा एउटामा वि.सं. १९४५ लेखिएको छ भने अर्कोमा वि.सं. १९९१ लेखिएको पाइन्छ । मन्दिरको द्वारमा राम्रा सिंहका प्रस्तरमूर्तिहरू राखिएका देखिन्छन् । मन्दिरपरिसरमा टिनको छाना भएको एउटा सत्तल पनि छ । आँगनको बीचमा कालीलाई बलिको भोग चढाउने एउटा काठको मौलो (खम्बा) गाडिएको छ ।

मन्दिरमा देवी दन्तकालीको पुजारीहरूद्वारा नित्य पूजा हुन्छ । प्रत्येक अष्टमीमा भगवतीको विशेष पूजा गरिन्छ । बलि दिने काम हुन्छ । पूजाका लागि गुठीको व्यवस्था छ । यहाँ दर्शन गर्न आउनेहरूको निकै भीड लाग्ने गर्दछ ।

यथार्थमा दन्काली प्रसिद्ध शक्तिपीठ हुन् । यिनको दर्शन पूजन गर्नु भुक्तिमुक्तिदायक मानिन्छ ।

स्रोतः १. गोरखभूमि
२. तीर्थपर्यटन, युवराज शर्मा गौतम

फागुको महिना आएको छ । चारैतिर रङ्गीबिरङ्गी वातावरण फैलिएको छ । अचानक राधाले कृष्णलाई फकाएर घरभित्र लग्छिन् र उनको गालामा खुबसँग रङ दलिदिन्छिन् । पिताम्बर खोसेर कृष्णलाई रङले नुहाइदिन्छिन् ।

**'लला ! फिर अइयो खेलन होरी ।'**

होली हास-परिहासको पर्व हो, हर्ष-उल्लासको पर्व हो जसको प्रतीक्षा सबैलाई पूरै वर्ष रहन्छ । फागुन महिनामा फैलिएको रङ्गीबिरङ्गी अबीर, रङले भरिएको पिच्का विभिन्न स्वरुपमा निखिन्छ । यसदिन यस्तो प्रतीत हुन्छ कि प्रकृतिले सम्पूर्ण रसिकता र उन्मत्तताको साकाररुप धारण गरेकी छिन् । त्यसैले त यो गइसकेपछि यसको प्रतीक्षा पुनः हुन थाल्छ । यस पर्वमा सबैको हृदयले यसको विविध रङबाट रङ्गिएर परमानन्द अनुभव गर्दछ । बालकदेखि लिएर वृद्धसम्म सबैको हृदयमा नवीनताको संचार हुन जान्छ, ज्ञानको बन्धन शिथिल हुन जान्छ– यस मदहोश महिनामा ।

यस रास-रङमय महिनामा प्रकृति पनि उन्मुक्त भएर उठ्छिन् । यसको रङमा रङ्गिन सबै जीवजन्तु, बोटबिरुवा हरुक्कै हुन्छन् । फागुन आउनासाथ सम्पूर्ण भूमण्डलमा होली उत्सवको धूम मच्चिन्छ र हर्षमय वातावरणमा मान-अभिमानको बन्धन टुट्दछ । सर्वत्र प्रेममय वातावरण सृजित हुन जान्छ । यस्तो लाग्छ कि परिपक्व प्रीतिलाई जगाउन र नवीन स्नेहको प्रारम्भको लागि नै होली पर्व आएको हो । सप्तरङ्गी रङको प्रभाबाट जीवनलाई सजाउने यस पर्वलाई विभिन्न नामले पुकारिन्छ– होलिकोत्सव, मदनोत्सव, कुसुमोत्सव ।

**'उत्सव प्रिय हम जनम-जनम के'**

कुनै कविताको लाइन हो यो । कालिदासले आर्यहरूलाई आफ्नो ग्रन्थमा उत्सवप्रिय भनेका छन् । प्राचीनकालमा आनन्द र आमोदप्रमोदका साथ प्रत्येक उत्सवलाई मनाउने प्रथा थियो... ।

'थियो' भनेर यसैले लेख्न बाध्य हुनुपर्छ किनकि विस्तारै युगीन व्यस्तताका कारण तथा एकअर्काप्रति मनमा सन्देहात्मक विचार पाल्दै रहनाले वर्तमान युगमा व्यक्तिको अन्तस यति विषाक्त भएको छ कि उसले उत्सवप्रियतालाई बिर्सिसकेको छ । कहिलेकाहीँ कसैको मनमा पूर्वसंस्कारवश उत्सवप्रियताको भावलाई भुल्न हुँदैन भन्ने विचार पनि उठ्छ । यस भावलाई हामीले कहिल्यै बिर्सन हुँदैन किनकि उत्सवमयको भावलाई

बिर्सेपछि हामी ठूटो बन्न जानेछौँ, यन्त्रचालित जीवजस्तै बन्न जानेछौँ । यस्तो मूर्दाजस्तो जीवन जिउनु पनि कुनै जीवन हो ?

भारतमा आर्ययुगीन सभ्यताकालमा होली पर्व धेरै धूमधामसित मनाइन्थ्यो भन्ने कुराको कैयौँ प्रमाण विभिन्न ग्रन्थहरूमा प्राप्त हुन्छ जसद्वारा थाहा पाइन्छ कि होली यस्तो मधुरम पर्व हो, जसमा शत्रुहरू पनि आफ्नो शत्रुता बिर्सेर एकअर्कालाई अंगालो हाल्न पुग्छन्, उत्सवप्रियताको बोधलाई साकार गर्छन् ।

...र यही प्रयास त पूज्यपाद सद्‌गुरुदेवले निरन्तर कैयौँ वर्षदेखि गर्दै आइरहनु भएको थियो । हरेक वर्ष हामी सबैका लागि उत्सवका विविध पर्वहरू जस्तै, होलिकोत्सव, अमृतोत्सव, दीपोत्सव, वसन्तोत्सव आदिको आयोजन हुन्छ । जसले पनि यी विविध उत्सवहरूमध्ये एउटा मात्रै पनि सहभागिता जनाएका छन्, उसलाई आफ्नो उत्सवप्रियताको बोध भएकै हुन्छ ।

होलीको आगमन अत्यन्तै धेरै मादकतालाई आफूमा समेटेर भएको हुन्छ कि जसको अनुभूति गरेर प्रेमीले आफ्नी प्रियतमालाई होली खेल्न आमन्त्रित गर्छ । तब त श्रीकृष्ण फागु आएपछि नवीन गोपीलाई होली खेल्नका लागि आवाहित गर्दछन्–

**आयो फागनु मास री,**
**गोरी खेलियो होरी ।**
**लाज किए नहिं काम सिरेगो,**
**यह आसर सुख रास री ।**

होलीको रङ्गीन रसिलो महिनामा सबैको निधारमा रस छचल्किन थाल्छ, सबैको हृदय झुम्न तयार हुन्छ, आनन्द र मस्तीमा डुब्नका लागि... तर यस आनन्दपर्वमा त्यो हृदयले मात्रै आनन्द लिन सक्छ जो जीवित छ, जाग्रत छ, चैतन्य छ ।

यसको मादकताको रङमा रङ्गिएर जीवनको उन्मुक्तताको अनुभव हुन्छ । आनन्द र मस्तीमा एकपटक पाइतला परेपछि फेरि रोकिन मान्दैन र हृदयमा प्रस्फुटन हुन्छ चैतन्यताको, दग्ध हृदयमा शीतलताको अनुभव गराउँदै होलीको रङमा रङ्गिन जान्छ जो कोही पनि ।

जहाँ सामान्यजनका लागि रागरङको उत्सव हो होली, त्यहीँ यो साधनात्मक दृष्टिकोणले अत्यन्त उपयोगी र अत्यन्त चिन्तनशील पनि छ । यो साधकहरूका लागि पूर्णताप्रदायक सिद्धिपर्व हो । यस पर्वको उपयोग साधक आफ्नो कुनै पनि साधनालाई सम्पन्न गरेर गर्न सक्छन् ।

तपाईँ प्रेम गर्नुस् वा साधना वा जीवनको कुनै अन्य कार्य गर्नुस् । जबसम्म तपाईँले पूर्ण तल्लीनताका साथ डुबेर त्यस कार्यलाई गर्नुहुन्न तबसम्म सफलता मिल्नेमा शंका रहन्छ । तपाईँले डुब्ने कला सिक्न चाहनुहुन्छ भने राधा-कृष्णको प्रेमलाई हृदयगंम गर्ने प्रयास गर्नैपर्छ किनकि राधा-कृष्णबिना डुब्ने कला अपूर्ण नै हुन्छ ।

आज पनि जसको रङमा रङ्गिएर मानिसले स्वयंको होश गुमाउन पुग्दछ र उन्मुक्तताको अनि जीवन्तताको महसुस गर्दछ र अग्रसर हुन पुग्छ त्यस मार्गमा जुन मार्गले उसलाई साधारण नरबाट मनुष्यत्वतिर र पुन: फेरि देवत्वतिर अग्रसर गराउँछ ।

यही आनन्दले त बारम्बार यो भन्न लालायित गर्दछ ती गोपीहरूलाई–

**'लला ! फिर अइयो खेलन होरी ।'**

जय गुरुदेव !

# आठौं रोट महोत्सव २०६८

परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ
एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको
असीम कृपा एवं अनुकम्पास्वरूप
पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यू तथा
गुरुदेव अरविन्द श्रीमालीज्यूको सान्निध्यतामा

## सवा लाख रोट महोत्सव

**साबर साधना तथा शक्तिपात
प्राप्त गर्ने स्वर्णिम अवसर**

**मितिः २०६८ जेठ ३ गते (गोरक्ष प्रकट दिवस) देखि
जेठ १३ गतेसम्म**

**स्थानः गोरख गुफा, गोरखा**

**आयोजकः**

**सिद्धाश्रम शक्ति केन्द्र नेपाल**

**बसुन्धरा, काठमाडौं, फोन २१००१५३**

# ऐतिहासिक सवाकरोड मंत्रजप महाअनुष्ठान

# नयाँ इतिहास रचियो

आफ्ना परमाराध्यदेवहरुको खुसी, प्रसन्नतामा नै जगत एवं समस्त मानवको कल्याण लुकेको यथार्थतालाई आत्मसात् गर्दै सिद्धाश्रम शक्ति केन्द्रले दिव्य दिव्य कार्यक्रमहरु सम्पन्न गर्ने क्रममा यसपालि कार्यक्रमलाई ऐतिहासिक जिल्ला गोरखास्थित गोरख गुफामा केन्द्रीत गऱ्यो । इतिहासमा नै एउटा अद्वितीय अन्तर्राष्ट्रिय साधना शिविर कार्यक्रम र अभिनन्दन समारोह भव्य एवं दिव्यरुपमा भर्खरै सम्पन्न गरेको यस केन्द्रले आफूलाई हौसला र प्रेरणाको भावनाले ओतप्रोत भएको पाएको छ । कार्यकर्ताहरुमा पनि शिविरसँगै एक किसिमको खुसी, उत्साह, उमंग एकाएक बढेको अनुभव भएको छ । सबैतिर आशा र उमंगका किरणहरुले आफ्नो प्रभुत्व जमाइरहेको जस्तो भइरहेको छ । ऐतिहासिक शिविरको रौनक सेलाउन पाउँदा नपाउँदै सवाकरोड मन्त्रजप महाअनुष्ठानजस्तो दिव्य कार्यक्रमको घोषणाले सबैमा फेरि उत्साहको संचार भएको थियो । गोरख गुफापरिसरमा अखण्डरुपमा सवाकरोड मन्त्रजप गर्ने महाअनुष्ठान हुने खबरले केन्द्रलगायतका सम्पर्क कार्यालयहरुलाई फेरि तताएको थियो । सवाकरोड अखण्ड मन्त्रजपको कार्यक्रम आफैँमा विशाल कार्यक्रम हो । माला जप्ने कुरा त्यति सजिलो हुने कुरै आएन । यस्तो दिव्यतम् कार्यक्रम शायद इतिहासमा नै पहिलोपल्ट आयोजना हुन गइरहेको थियो । सिद्धाश्रम शक्ति केन्द्रले यस्तो वृहत् कार्यक्रम आयोजना गर्ने सौभाग्य प्राप्त गऱ्यो । यस्तो दिव्य कार्यक्रम त्यो पनि दिव्य दिन महाशिवरात्रिबाट शुभारम्भ हुने घोषणाले सबैमा धेरै तपस्या गर्ने मानसिकता बन्न गयो । भगवान् शिवको यस दिव्यतम् दिनमा शिवस्वरुप गुरुको तपस्या गर्न पाउनु आफैँमा सबैका लागि राम्रो संयोग बनेको थियो । यताउता गर्दागर्दै सवाकरोड मन्त्रजप गर्ने दिन नजिकियो । यसपालिको महाशिवरात्रि पर्व संस्थाको लागि अलि व्यस्त कार्यक्रम हुन गयो किनकि एकातिर प्रत्येक वर्ष सम्पन्न गर्दै आइएको आराध्यदेव भगवान् श्री पशुपतिनाथको प्रांगणमा भजनकीर्तन एवं स्वास्थ्यशिविरको कार्यक्रम थियो भने अर्कोतिर पहिलोपल्ट सवाकरोड मन्त्रजपको महाअनुष्ठान कार्यक्रम त्यो पनि गोरखाको पावन एवं दिव्य डाँडामा अवस्थित गोरख गुफामा । कार्यकर्ता परिचालन, व्यवस्थापन मिलाउन कार्यकर्ताहरु दिलोज्यानले लागिपरेका थिए । २/३ दिनअगाडिदेखि नै पशुपति क्षेत्र र गोरख गुफा दुवैतिरका तयारीहरु अगाडि बढेका थिए । महाशिवरात्रिमा यसै पनि जाग्राम बसेर भगवान् शिवलाई खुसी बनाउन सबैले कोशिस गर्थे नै भने यसपालि मन्त्रजपका साथ जाग्राम बस्न पाउने दिव्यतम् अवसर सबैका लागि सिद्धाश्रम शक्ति केन्द्रको आयोजनामा भइरहेको थियो ।

केहीलाई पशुपतिमा आयोजना हुने कार्यक्रमका लागि जिम्मेवारी सुम्पेर धेरैजसो गोरखा लागेका थियौं । करिब ४/५ वटा बसले भरिभराउ गुरुसेवकसेविकाहरुले गोरखाको नवनिर्मित भवन खचाखच भएको थियो । शिवरात्रीको अघिल्लो दिन अखण्ड जप गर्ने स्थानलाई व्यवस्थित बनाउन गुरुसेवकसेविकाहरु लागिरहेका थिए । यस दिव्य कार्यक्रमको तयारीमा कार्यकर्ताहरुलाई नेपाली सेनाले पनि ठूलो सहयोग गरेका थिए ।

पालदेखि कम्बलसम्म आफैं आएर एक अढाइ घण्टामा टाकटुक सबै मिलाइदिएर अति नै सराहनीय कार्य गरेका छन् नेपाली सेनाका जवानहरुले । यसरी मन्त्रजपको व्यवस्था एकातिर चलिरहेको थियो भने अर्कोतर्फ अन्नपूर्ण पुष्टता युनिटका साधकसाधिका गुरुसेवकसेविकाहरु सबै आगन्तुकहरुलाई प्रसाद खुवाउन व्यस्त थिए, बसोबासका कार्यकर्ताहरु गुरु सेवकसेविकाहरु सबैलाई कम्बलहरु बाँड्दै सुत्ने ठाउँ मिलाउँदै थिए । पानीको समस्या, शौचालयको समस्या भएको यस ठाउँमा लोडसेडिङ्गले अझै अप्ठ्यारो पारेको थियो । गुरु कार्यमा दत्तचित्त साधकसाधिका कार्यकर्ताहरु सबैको हातमा टर्चलाइट र बालिएका मोबाइलहरु देखिन्थे । प्रसादको व्यवस्थाको क्रम करिब रातको ११:०० बजेसम्मै चलेको थियो । भोलिको कार्यक्रमको सामान्य जानकारीपछि सबैजना आश्रमभवनको काखमा रात बिताउन थाले । अर्को दिन बिहान साढे पाँच बजेतिर गोरख गुफामा जम्मा हुने कार्यक्रम राखिएको थियो ।

महाशिवरात्रिको दिव्यतम् पर्वमा एकाबिहानै ५:०० बजेदेखि नै गोरख गुफाको परिसर पहेँला सल ओढेका साधकसाधिकाहरुले भरिभराउ थिए । करिब साढे पाँच बजेतिर परमपूज्य सद्‌गुरुदेवहरुको दिव्यतम् पादुका पूजनबाट कार्यक्रम अगाडि बढेको थियो । संयोजकहरुले पादुका पूजन गरेपछि कार्यक्रमको प्रक्रिया अगाडि बढेको थियो । परमपूज्य सद्‌गुरुदेवहरुको जयकार, प्रार्थनाबाट मन्त्रजपलाई अगाडि बढाइएको थियो । करिब ३ सय जनाको उपस्थितिका साथ मन्त्रजप अगाडि बढ्दाको क्षण आफैंमा दिव्यतम् थियो । योग प्रचारको लागि, योगको मार्गबाट मृत्युमाथि विजय प्राप्त गर्दै मोक्ष प्रदान गर्ने स्वरुपको रुपमा प्रतिष्ठित श्री शिवगोरक्ष प्रथमपटक प्रकट भएको यस दिव्यतम् धाममा संचालन भएको अखण्ड मन्त्रजपले भविष्यमा साँच्चिकै आध्यात्मिक धरोहर स्थापित हुने संकेत दिएको भान हुन्थ्यो । सबै साधकसाधिकाहरु दिव्य दिव्य अनुभूतिका साथ मालाजपको संख्या बढाउन तल्लीन थिए । कस कसलाई परमपूज्य सद्‌गुरुदेवहरु श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज र माताले के के कृपा वर्षाइरहनु भएको छ, त्यो हाम्रो कल्पनाभन्दा धेरै परको विषय थियो । प्राय: सबै जिल्लाका सम्पर्क कार्यालयका साधकसाधिकाहरु देख्न पाइन्थ्यो भने गोरखाका साधकसाधिकाहरु पनि उत्साहित देखिन्थे । संयोजक दाइदिदीहरु पनि मन्त्रजपमा तल्लीन देखिनुहुन्थ्यो । यसरी सवाकरोड मन्त्रजपको कार्यक्रम पूर्ण व्यवस्थितरुपमा अगाडि बढेको देखिन्थ्यो । मन्त्रजप गर्नेहरु एकछिन थाकेपछि उठेर मन्त्र टिपाउन व्यस्त देखिन्थे भने कोही प्रसाद लिन जाने, कोही लिएर आउने, कोही उठेर शरीर तन्काउने, कोही शौचालय जाने, कोही दर्शनमा व्यस्त भएका दृश्यहरु महाशक्ति गोरखकाली माताको प्रांगण, पण्डित पाटी, गुफापरिसरमा देखिन्थे ।

यसरी समय आफ्नै रफ्तारमा अगाडि बढिरहेको थियो, साधकसाधिकाहरु जपतपमा तल्लीन हुदा हुँदै भगवान् सूर्य अस्त भइसक्नु भएको थियो । बेलुकीको समय शान्त मनोरम हुँदै आइरहेको थियो । सबैमा उत्साह, उमंग देखा पर्दै थियो । यस्तो अँध्यारो रात छिपिरहँदा पनि जपतपमा लागिरहेको दृश्यले गुरुकृपा भइरहेको छ भन्ने भान हुन्थ्यो । सूक्ष्मसत्ताबाट गुरुदेवले कृपा गर्नुभएको कारणले होला सबैमा एकोहोरो मन्त्रजपको लगाव रातमा समेत देख्न पाइन्थ्यो । मन्त्रजप गरेर उठ्ने साधकसाधिकाहरु प्रसन्न मुद्रामा देखिन्थे, आयोजकहरुले व्यवस्था गरेको चियाकफी हातमा लिँदै चिसो रातमा तपाईंको कति माला भयो ? अनि तपाईंको नि ? जिज्ञासा राख्नेहरुको चियाकफी गफ पनि बढ्दो रमाइलो थियो । महाशिवरात्रिको रात भएकोले एकातिर शिवधुनी अगाडि जगाएर ताप्दै भजन गायन र नाचगानमा पनि साधकसाधिकाहरु

मस्त थिए । यसरी मन्त्रजपपछि उठेर चियाकफी पिएर केही छिन ताजा हुने अनि फेरि मन्त्रजप गर्ने क्रममा रात बित्यो । ब्रह्ममुहूर्तपछि विस्तारै सूर्यदेवको किरणले दर्शन दिएको भान हुन्थ्यो, पल्लो छेउबाटै हिमाल खुलेर स्वागत गरेजस्तो लाग्थ्यो, यस्तो मनोरम दृश्य, शान्त आनन्ददायक वातावरणले तपस्यामा अर्कै ऊर्जा प्राप्त भएको पाइन्थ्यो ।

मन्त्रजपको दोस्रो दिन पनि आनन्दले चलिरहेको थियो, साँझपख एकाएक प्रकृतिमा गड्गडाहट शुरु भयो, हल्का जलको वर्षा भयो, पवनदेव वेगले घुम्न लाग्नुभयो, पूरै आकाशबाट वातावरण बडो अवर्णीयरुपमा सुन्दर देखियो । लाग्यो सवाकरोड मन्त्रजपको महाअनुष्ठानको आधा अर्थात् ५० लाखभन्दा बढी संख्या भइसकेको थियो । यसरी प्रकृतिले स्वागत गरेको दृश्य र वातावरणमा आएको एकाएक परिवर्तनले व्यवस्थापन मिलाउने कार्यकर्ताहरु अलि हतासिएको जस्तो लाग्थ्यो भने आकाशमा स्पष्टरुपमा देखिएका ताराहरुले नआत्तिने संकेत दिएको भान हुन्थ्यो । जे होस्, मन्त्रजपको प्रवाह ब्रह्माण्डमा पुगेको अनुभव हुन्थ्यो । यसरी मन्त्रजपको क्रम अगाडि बढिरह्यो । फेरि उही क्रम जोडिरह्यो । प्रसाद खाएर आई मन्दी ओढेर रातभर मन्त्रजपमा लाग्नेहरुको संख्या पनि उल्लेखनीय नै रह्यो । तपस्याको वास्तविक अनुभव धेरै व्यक्तिहरुले गरेको पाइन्थ्यो । बस्ने अभ्यास नहुनेहरु पनि कोशिस गरिरहेका देखिन्थे । खुट्टा तिघ्राहरु दु:खे पनि एकछिन खुट्टा तन्काउँदै जपतपमा लाग्नेहरुको पनि कमी थिएन । यस्तो दिव्यतम् स्थल जहाँ गुरु गोरखनाथ विराजमान हुनुहुन्छ, जहाँ महाशक्ति गोरखकाली माता साक्षात्रुपमा विराजमान हुनुहुन्छ, यस्तो दिव्य पवित्र स्थानमा बसेर  रातभरिसमेत पनि तपस्या गर्न पाउने यो पहिलोपटक थियो । आज पनि साधकसाधिकाहरुमा उत्तिकै उत्साह, उमंग देखिएको थियो । रातभर मन्त्रजप अनि थकाइ लागेपछि उठेर चियाकफी पिएर एकछिन थकाइ मारी पुन: जपतपमा लाग्नेहरुको संख्या उल्लेखनीय नै थियो । सबैमा यस दिव्य स्थानमा बसेर जप्दाखेरि हुने दिव्य अनुभूतिको पर्खाइ थियो । दिव्यानुभूतिले धेरैमा खुसी एवं प्रसन्न अनुहार भेटिन्थ्यो । यसरी दोस्रो दिन पनि बित्यो । बिस्तारै सूर्यदेवले आफ्ना दिव्यरश्मी फैलाउनुभयो । जपमा लाग्नेहरु पालैपालो कोही आराम गरेका हुन्थे, अनि आएर जप्थे । कोही जपेर आराम गर्न जान्थे । यसरी पालैपालो अखण्डरुपमा दुई दिन बित्यो । मन्त्रको संख्याले कहिले अलि गति लिएजस्तो हुन्थ्यो भने कहिले विस्तारै चलेको जस्तो । यसरी मन्त्रजप गर्ने साधकसाधिका हेर्दा पनि लाग्थ्यो कि गुरुदेवले नै छानेर ल्याउनुभएको छ सबैलाई। नसोचेका साधकसाधिकाहरु राम्रो जमघट, जपतपमा लागेको देखिन्थ्यो ।

यसरी घण्टाहरु बित्दै गइरहेका थिए भने मन्त्रसंख्या पनि बढ्दै गइरहेका थिए । आज मन्त्रजपको तेस्रो दिन चलिरहेको थियो ।

महाअनुष्ठानको तेस्रो दिन मन्त्रजपमा लाग्नेहरुको गति बढ्दो थियो । कति साधकसाधिकाहरु सवालाख अनुष्ठान पूरा गर्ने तयारीमा थिए, कति सवा लाखको नजिक थिए भने त कतिले सवालाख पूरा गरेको दावी गर्नेहरु पनि थिए । मन्त्रजपको क्रमसितै दिन पनि ढल्किँदै गयो । भोलिपल्ट गुरुसेवा दलको तालिम तथा प्रशिक्षण कार्यक्रम भएकोले विभिन्न जिल्लाबाट गुरुसेवा दलका सदस्यहरु पनि आइरहेका थिए । उनीहरु पनि मन्त्रजपमा लागेका थिए। प्रसाद लिएर मन्त्रजपमा लाग्नेहरुको संख्या आजको रातमा पनि कम थिएन । करिब एक करोड पुगिसकेको थियो । त्यसैले होला साधकसाधिकामा राम्रै उत्साह देखिन्थ्यो । बेलुकी जप गर्नेहरुले अझै रफ्तारमा दिव्य दिव्य अनुभूति प्राप्त गर्दै मन्त्रजपको संख्या पनि बढाइरहेका थिए । यस्तै क्रममा जप, ध्यानमा मस्त साधक साधिकाको कानमा दिव्य स्वरमा बच्चा कराएजस्तो, रोएजस्तो आवाज तीनपटक आयो । पक्कै माताको कृपा होला भन्ने सबैमा भयो किनकि त्यसपछिको ऊर्जाको अनुभव नै अर्कै रहेको थियो । यसरी सबैले दिव्य दिव्य अनुभूतिहरु पनि प्राप्त गर्दै थिए । यस्तो क्रमसँगै सवाकरोड संख्या पुगिसकेको थियो । यो संख्या पुऱ्याउने क्रममा रातको जपसंख्या पनि राम्रै थियो । बिहान करिब ८, ९ बजेतिर आरती शुरु भयो । आरतीपछि संकीर्तन अगाडि बढ्यो । संयोजकज्यूहरुको धन्यवाद क्रम, प्रदीपनाथ योगीज्यूको धन्यवाद ज्ञापन, नाथजीहरुलाई फूलप्रसाद बाँध्ने क्रम पनि अगाडि बढ्यो । मन्त्रजपको संख्या १ करोड तीस लाख पुगेको थियो । यो महाअनुष्ठान पूरा भएकोमा खुसियाली मनाउँदै नृत्यमा मग्न थिए साधकसाधिकाहरु । यसरी तीन दिनसम्म अखण्डरुपमा चलेको मन्त्रजप महाअनुष्ठान सम्पन्न भयो । सिद्धाश्रम शक्ति केन्द्रको यस दिव्यतम् कार्यक्रम आशानुरुप सम्पन्न भयो । यसप्रकार सिद्धाश्रम शक्ति केन्द्र पुनः नयाँ इतिहास रच्न सफल भयो । राष्ट्रिय टेलिभिजन एवं स्थानीय पत्रपत्रिकामा समेत यस मन्त्रअनुष्ठानको कुराले प्रमुखता पाएको थियो । यसरी तपस्यात्मक कार्यक्रम गर्दै कार्यकर्ता साधकसाधिकाहरुले फड्को मार्ने क्रम अगाडि बढ्यो ।

जय गुरुदेव !

# अप्रिल ८ तारिख पूजनीय माताजीको जन्मोत्सव

अति नै आनन्ददायक, अति नै दुर्लभ, दिव्य, भव्य, अतुलनीय एवं अद्वितीय पावन अवसर हाम्रो सामु नजिकिँदैछ हाम्रो सौभाग्यलाई अझै दरिलो र भरिलो पार्न, हामी सबै गुरु सेवकसेविकाहरुको भाग्योदयको आगमनमा नयाँ अध्याय थप्न पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको शुभजन्मोत्सवको पुनीत अवसर भएर। हामी सबैलाई मस्ती दिने, हामी सबैमा उमंग भर्ने, हामी सबैको मनोरथ पूरा गर्ने अनि हाम्रा सबै पापराशिलाई निर्मूल गर्ने पावन घडी नै त हो माताको शुभजन्मोत्सव । हामी सबैले भव्यताका साथ, दिव्यताका साथ, जोश, जाँगर, उत्साह, उमंग लिएर, नयाँ ऊर्जालाई आफूमा केन्द्रीकृत गरेर, नवीन प्राणलाई सबैतिर फैलाएर आनन्दित भएर, तरंगित भएर पूजनीय गुरुमाताको जन्मोत्सवलाई भव्यरुपमा मनाउन गइरहेका छौं यही चैत्र महिनाको २८ गते तदनुसार अप्रिल ८ तारिख । अप्रिल ८ तारिख हामी सबै गुरु शिष्यशिष्याहरुका लागि अति नै मंगलमय दिन हो, अति नै दिव्य दिन हो, अति नै सौभाग्यको दिन हो । यसदिन हामी पूजनीय माताजीको ७८ औं शुभजन्मोत्सव मनाउन गइरहेका छौं ।

गुरुमाताको जन्मोत्सव भनेको सद्गुरुको जन्मोत्सव नै त हो किनकि सद्गुरु र गुरुमातामा कुनै भेद छैन । सद्गुरुदेव नै माताजी हुनुहुन्छ र माताजी नै सद्गुरुदेव हुनुहुन्छ । सद्गुरुदेव होऊन् वा माताजी, २१ अप्रिल होस् वा ८ अप्रिल, दुवै शिष्यहरुका लागि समान छन् । यसैकारण माताजीको जन्मोत्सव पनि हाम्रा लागि उतिकै सान्दर्भिक छ, उतिकै महत्त्वपूर्ण छ र उतिकै गरिमा र महिमाले युक्त छ । माताजीको जन्मोत्सव पनि हाम्रा लागि एउटा महोत्सव हो २१ तारिखजस्तै, यो एउटा महाअनुष्ठान हो, पुरश्चरण हो, दिव्यता र भव्यताको अद्वितीय अवसर हो ।

यस अवसरलाई हामीले सदा सदा मनाउँदै आइरहेका पनि छौं ।

चैत महिना देवीको उपासन गर्ने महिना पनि हो । यसै महिनामा चैतेदशैं पनि पर्दछ । दशैं जगदम्बाको उपासना गर्ने पावन समय हो । यस समयमा हामी नवदुर्गा भवानीको पूजा, अर्चना गर्दछौं । हामी अति नै सौभाग्यशाली छौं किनकि यसै महिनामा पूजनीय गुरुमाताको जन्म दिवस मनाउने गर्छौं हामी । जगदम्बाको उपासनाको महिना र माताजीको जन्मोत्सव महिना एकै महिनामा पर्नु एउटा संयोग मात्रै होइन । यो त उनै जगदम्बास्वरुप माताको असीम कृपा हो जो साक्षात् जगदम्बिका हुनुहुन्छ । उहाँले नै यस्तो पावन महिनामा यस धर्तीमा पदार्पण गरेर समस्त शिष्यशिष्याहरुलाई एकै महिनामा जगदम्बाको उपासना र उहाँको जन्मोत्सव मनाउने अवसर दिनुभयो ।

त्यसैले, उहाँको शुभजन्मोत्सवलाई हामी प्रत्येक शिष्यशिष्याहरुले पूर्ण भक्तिभावका साथ मनाऔं, उहाँको कृपा, आशीर्वादको भागीदार बनौं, पात्र बनौं ।

जय गुरुदेव !

## पृथ्वीवासीहरूको लागि सौभाग्यको दिन

# श्री रामनवमी

चैत्र महिनाको शुक्लपक्षको नवमी तिथिमा मनाइने पर्व रामनवमी हो । रामनवमी भगवान् विष्णुको सातौं अवतार भगवान् श्री रामचन्द्रको जन्मदिन हो । यो ज्यादै पवित्र दिन मात्र नभएर अलौकिक दिन पनि हो । त्रेतायुगमा अयोध्याका राजा दशरथ र महारानी कौशल्यादेवीका पुत्ररत्नका रुपमा अलौकिक लक्षणले युक्त भगवान् श्री रामचन्द्रको जन्म भएको थियो । उहाँ जन्मँदा पुनर्वशु नक्षत्र, चन्द्रमाका साथमा वृहस्पति भएका कर्कट लग्न र पाँच ग्रह (रवि, मंगल, गुरु, शुक्र, शनि) एकैसाथ थिए । यस्तो पवित्र दिनमा भगवान् श्री रामचन्द्रको जन्म हुन जाँदा यस दिनको महत्त्व अझ बढ्न गयो ।

श्री रामनवमी सम्पूर्ण जगत्का लागि सौभाग्यको दिन हो किनकि अखिल विश्वपति सच्चिदानन्दघन श्री भगवान् यसै दिन दुर्दान्त रावणको अत्याचारबाट पीडित पृथ्वीलाई सुखी पार्न र सनातन धर्मको मर्यादा स्थापना गर्नका लागि मर्यादापुरुषोत्तम श्रीरामको रुपमा प्रकट हुनुभएको थियो । भगवान् श्रीराम केवल हिन्दुहरूका मात्रै 'राम' हुनुहुन्न, उहाँ त अखिल विश्वका प्राणाराम हुनुहुन्छ । भगवान् श्रीराम र भगवान् श्रीकृष्णलाई केवल हिन्दुहरूका मात्रै सम्पत्ति मान्नु उहाँहरूको गुणलाई घटाउनु हो, असीमलाई सीमाबद्ध गर्नु हो । विश्व चराचरमा आत्मरुपमा नित्य रमण गर्नुहुने र स्वयं नै विश्व चराचरको रुपमा प्रतिभासित सर्वव्यापी सर्वान्तर्यामीस्वरुप नारायण कुनै एक देश वा व्यक्तिको मात्रै वस्तु कसरी हुन सक्छ ? उहाँ सबैका हुनुहुन्छ, सबैमा हुनुहुन्छ, सबैका साथ सदा संयुक्त हुनुहुन्छ र सर्वमय हुनुहुन्छ ।

श्री रामनवमी सौभाग्यको दिन हो । यही त्यो दिन हो जब विश्वपति सच्चिदानन्द श्री भगवान् रामले यस पृथ्वीमा अवतार लिनुभएको थियो । धन्य हुनुहुन्छ राजा दशरथ र कौशल्या कि उहाँहरूलाई श्रीरामको पालन गर्ने सौभाग्य प्राप्त भयो जसले स्वयं यस संसारको पालन गर्नुहुन्छ । भगवान् श्रीरामले सनातन धर्मको रक्षाका लागि यस पृथ्वीमा अवतार लिनुभयो र राक्षसराज रावणको अन्त गरेर सनातन धर्मीहरूको धर्मलाई रक्षा गर्नुभयो । उहाँ महान् आदर्श पुरुष हुनुहुन्थ्यो । यसैले उहाँलाई मर्यादा पुरुषोत्तम भनिन्छ । जसले उहाँको आदर्शदय मर्यादा लीला, उहाँको पुण्यचरित्रको श्रद्धापूर्वक गान, श्रवण र अनुकरण गर्दछ, उसले पवित्र हृदय भएर परमसुखलाई प्राप्त गर्दछ । श्री रामसमान् आदर्शपुरुष, आदर्श धर्मात्मा, आदर्श नरपति, आदर्श मित्र, आदर्श भाइ, आदर्श पुत्र, आदर्श गुरु, आदर्श शिष्य, आदर्श पति, आदर्श स्वामी, आदर्श सेवक, आदर्श वीर, आदर्श दयालु, आदर्श शरणावत्सल, आदर्श संयमी अन्य को भएका थिए ? जगत्को इतिहासमा श्रीरामको तुलनामा एक श्रीराम नै हुनुहुन्छ । साक्षात् परम पुरुष परमात्मा भए पनि श्रीरामले जीवहरूलाई सत्पथमा आरुढ गराउनका लागि यस्ता आदर्श लीलाहरू रच्नुभयो जसको अनुकरण सबैले सुखपूर्वक गर्न सक्छन् । उनै

श्रीरामको पुण्य जन्मदिवस चैत्रशुक्ल नवमी हो । यस सुअवसरमा सबैले श्री रामजन्मको पुण्योदय मनाउनु पर्दछ । यस उत्सवको प्रधान उद्देश्य श्रीरामलाई प्रसन्न गर्नु र उहाँका आदर्श गुणहरूको विकास आफूमा गरेर श्रीरामको कृपा प्राप्त गर्ने अधिकारी बन्नु हुनुपर्दछ । अतएव श्रीरामको आदर्श चरित्रको अनुकरणमाथि विशेष ध्यान राख्नुपर्दछ ।

अगस्त्यसहिताअनुसार चैत्रशुक्ल नवमीका दिन पुनर्वसु नक्षत्र, कर्क लग्नमा जब सूर्य अन्यान्य पाँच ग्रहहरूको शुभ दृष्टिका साथ मेषराशिमा विराजमान भएको बेला साक्षात् भगवान् श्रीरामको जन्म माता कौशल्याको गर्भबाट भयो । यसैले त्यो दिनभरि उपवास र रातभरि जागरणको व्रत राखेर भगवान् श्रीरामको पूजा गरिन्छ तथा आफ्नो आर्थिक स्थितिअनुसार दानपुण्य गर्दछ भने अनेक जन्मका पाप राशि भस्म हुन्छ ।

शास्त्रका अनुसार कुनै पनि व्रत बसे पनि त्यसका लागि श्रद्धाभक्ति र नियम निष्ठा अवश्यै हुनुपर्दछ । बिना श्रद्धाभक्ति मनका यी अशुद्धि र अपवित्रता कहिल्यै दूर हुन सक्दैन । जब भौतिकताले प्रबल प्रचण्ड भएर संस्कृतिलाई निल्न थाल्दछ तब श्रद्धाभक्तिपूर्ण व्रतोपासना नै आवश्यक हुन्छ । रामनवमीका दिन भगवान् श्रीरामले जन्म लिनुभएको थियो । अत: यसदिन उपवास र जागरणबाट त्यस पुरुषोत्तमका कल्याणकारी चरित्रको अनुचिन्तन र अनुशीलन हुनुपर्दछ ।

रामनवमीका दिनमा खासगरी रामलीला गर्ने चलन छ । राम जन्मभूमि भारतको अयोध्या र सीताको जन्मभूमि नेपालको जनकपुरमा धूमधामसँग रामलीला सम्पन्न गरिन्छ । जनकपुरको जानकी मन्दिरमा भक्तजनको घुइँचो लाग्दछ । देशभरका राममन्दिर हरूमा दर्शनार्थीहरूको भीड लाग्दछ । यस दिन हिन्दुहरू भगवान् श्रीरामचन्द्रको पूजा गर्ने, कीर्तन गर्ने, राम नामको जप गर्ने र व्रत बस्ने गर्दछन् ।

# चैते दशैं

नवरात्रि दुइटा हुन्छन् । पहिलो आश्विन शुक्ल प्रतिपदादेखि नौ दिनसम्म मनाइने शारदीय नवरात्रि र दोस्रो चैत्र शुक्ल प्रतिपदादेखि नवमीसम्म मनाइने वासन्तीय नवरात्रि । नवरात्रिका दिनमा श्री दुर्गा भवानीले नौ दिनसम्म नौरुप धारण गर्ने भएकीले दुर्गा भवानीका नौ पीठमा गएर दर्शन, पूजा गरिन्छ । यी दुवै नवरात्रिको उत्तिकै महत्त्व छ । के पनि भनिन्छ भने पहिले चैते दशैंलाई नै दशैंका रुपमा मनाइन्थ्यो । पछि असोजलाई अनुकूल मानी शारदीय नवरात्रिमा दसैं मनाउन थालियो । असोज महिनामा खेती सकिएर फुर्सद मिल्ने, गर्मीको प्रकोप शान्त हुने, गरिष्ट भोजनले पनि धेरै विकार नगर्ने भएकोले दशैंलाई असोजमा सारिएको हो । देवी पार्वतीले भन्नुभएअनुसार चैत्र शुक्लपक्षको तृतीया वा चैत्रीय नवरात्र अथवा वासन्तीय नवरात्रको तेस्रो दिन सौभाग्यसूचक वस्तु (कुंकुम, पुष्प, चन्दन, पान, गाजल, उखु, लवण, जीरा) आफू बराबर तौलेर उहाँलाई अर्पण गर्ने नारीले विधवा हुनु पर्दैन । यस दिन नून खानु हुँदैन ।

रामनवमीको अघिल्लो दिन अष्टमी तिथिमा मनाइने पर्व चैते दशैं हो । चैत्राष्टमी पर्व वसन्त ऋतुमा पर्ने भएकाले यसलाई वासन्ती पनि भनिन्छ । यस पर्वमा जसले शुद्ध पवित्र भई देवीको पूजन गरी रामनवमी पर्व मनाउँछ त्यसलाई सम्पूर्ण श्री प्राप्त हुन्छ भनी हाम्रा शास्त्रहरूले उल्लेख गरेका छन् । सरकारीस्तरबाट चैतेदशैं मनाउनका लागि एकदिन बिदा दिइन्छ । यो दशैं ज्यादै सामान्यरुपमा मनाइन्छ । यस दिनमा चेलीबेटीहरूलाई घरमा डाकेर खानपिन गराउने परम्पराचाहिँ कायमै छ ।

चैत्र अष्टमीका दिनमा काठमाडौं केलटोलको मच्छिन्द्रबहालबाट सेतो मच्छिन्द्रनाथको यात्रा पनि निकालिन्छ । यो यात्रा चैत्राष्टमीदेखि शुरु भई एकादशीसम्म चार दिन मनाइन्छ । यात्राको पहिलो दिनदेखि जमलबाट श्वेत मच्छिन्द्रनाथलाई रथमा बसालेर यात्रा प्रारम्भ गरिन्छ र असनसम्म पुऱ्याइन्छ । दोस्रो दिन असनबाट कालभैरवसम्म पुऱ्याइन्छ । दशमीकै दिनमा लगनटोलसम्म पुऱ्याइन्छ र एकादशीका दिनमा मच्छिन्द्रनाथको मूर्तिलाई सानो रथमा राखेर लगनटोलबाट मच्छिन्द्रबहाल नै पुऱ्याइन्छ । यस अवसरमा पूजा गरी प्रसाद ग्रहण गरेर घर घरमा भोज गर्ने परम्परा छ । सेतो मच्छिन्द्रनाथलाई सहकालका देवता मानिन्छ । उहाँको रथयात्रा गरेमा देशमा अनिकाल हटेर सहकाल हुन्छ भन्ने कुरा स्वयम्भू पुराणको बुद्ध वचनमा उल्लेख छ ।

चैत्रशुक्ल अष्टमी चैतेदशैंका विषयमा यस्तो किंबदन्ती प्रचलित छ– कुनै समय मिथिलामा जनक नामका राजा थिए । उनले आफ्नी छोरी सीताको विवाह पराक्रमी र बलवान् पुरुषसँग मात्र गरिदिने अठोट गरेका थिए । उनले आफूसँग रहेको शिवधनुष उठाएर त्यसमा ताँदो चढाउन सक्नेसँग सीताको विवाह गरिदिने प्रतीज्ञा गरेका थिए । बाल्यकालमा सीताले सो धनुष कुनै परिश्रमबिना उठाएको जनकले आफ्नै आँखाले देखेका थिए । सीता विवाहयोग्य भइसकेपछि उनको स्वयम्बर समारोहको आयोजना भयो । त्यसमा भाग लिन राजा जनकले राजा र राजकुमारहरूलाई आमन्त्रण गरेका थिए । सबै वीरयोद्धाहरू उपस्थित भए । अयोध्याका राजा दशरथका पुत्र श्रीरामचन्द्रजी पनि मिथिला पुगेका थिए । राजा जनकले जसले शिवको धनुष उठाएर त्यसमा ताँदो चढाउन सक्छ उसैसँग आफ्नी पुत्री सीताको विवाह गरिदिने घोषणा गर्दै समारोह शुरु गर्ने आज्ञा दिए । देवी सीता पनि त्यहाँ उपस्थित थिइन् । उनको हातमा वरमाला थियो । कैयौं राजा र राजकुमारहरूले प्रयास गरे तर विफल भए । राजालाई सीताको विवाह नै हुन नसक्ने हो कि भन्ने चिन्ता पऱ्यो । त्यत्तिकैमा महर्षि विश्वामित्रले आफ्ना शिष्य श्री रामचन्द्रलाई शिवधनुष उठाउने आज्ञा दिए । श्रीरामले आफूले हाँसिल गरेको विद्याका प्रभावले सो धनुष उठाई ताँदो चढाउन लाग्दा धनुष भाँचिएर

दुई टुक्रा भयो। सीताले श्री रामलाई वरमाला पहिऱ्याइन् र सीतारामको विवाह सम्पन्न भयो ।

यही सीतारामको विवाहको सम्झनामा प्रत्येक वर्ष रामनवमीका दिनमा सीता जन्मभूमि जनकपुरमा ठूलो मेला लाग्छ। अयोध्यानरेश दशरथपुत्र रामचन्द्र र जनकपुत्री सीताको विवाहसम्बन्धी घटनालाई अभिनय रुपले लोकसमक्ष वर्षेपिच्छे प्रदर्शन गर्ने काम धनुषाको जनकपुरधाममा अहिले पनि धुमधामसँग हुन्छ। यसैलाई विवाहपञ्चमी मेला भनिन्छ ।

सीता जन्मका सम्बन्धमा अनेक किंवदन्ती प्रचलनमा छन् । एउटा किंवदन्तीअनुसार यज्ञभूमि निर्माण गर्नका लागि जनकले हलो जोत्दा माटोबाट कन्या उत्पन्न भएकी र राजा जनकले पुत्रीका रुपमा ग्रहण गरेका थिए । अधिकांश विद्वान्हरूले सीताको अलौकिक जन्मलाई स्वीकार्दै उनीलाई भूमिजा भनेका छन् । कतै सीतालाई मन्दोदरीका गर्वबाट उत्पन्न भएकी भनिएको छ भने कतै पद्मजा र रक्तजा पनि ।

प्राय:जसो चाडहरू वर्षमा एकपटक आउँछन् तर दशैं नवरात्रि अथवा दुर्गा पूजा यस्तो चाड हो जुन एक वर्षमा चारपटक आउँछ । प्रत्येक तीन तीन महिनामा नवरात्रि पर्व आउँछ । यी चारवटा दशैंमध्ये चैत्र शुक्लपक्ष र आश्विन शुक्लपक्षमा मनाइने दशैंलाई जाग्रत दशैं वा नवरात्रि भनिन्छ भने आषाढ र पौष महिनामा पर्ने दशैं सुक्त दशैं हुन् । उत्तरायणमा एकपटक र दक्षिणायनमा एकपटक गरी दुईवटा जाग्रत दशैं धुमधामसँग मनाइन्छ । नवरात्रिका नौ दिनहरू नौवटा दिनमा भिन्न भिन्न शक्तिहरूका साधनाका दिन हुन् । नवदुर्गाका भिन्न भिन्न रुपको भिन्न भिन्न दिनमा पूजा, आराधना गरिन्छ। प्रथम दिन सरस्वती ज्ञानकी अधिठात्री देवी, दोस्रो पार्वती मातृत्वकी अधिठात्री देवी, तेस्रो दिन गौर प्रणयकी अधिष्ठात्री देवी, चौथो दिन रुद्राणी गृहस्थ जीवनकी अधिष्ठात्री देवी, पाँचौ दिन नारायणी (राधा) आनन्दकी अधिष्ठात्री देवी, छैठौं दिन शक्ति अधिकारकी अधिष्ठात्री देवी, सातौं दिन गंगा भावनाका अधिष्ठात्री देवी, आठौं दिन लक्ष्मी धनकी अधिष्ठात्री देवी र नवौं दिन महाकाली दुष्टता संहारकी अधिष्ठात्री देवीको पूजा गरिन्छ। यी भिन्न भिन्न स्त्रीशक्तिहरूसँग शिवले अलग अलग संयोग गर्नुभयो । यी सबैलाई एकाकार गरेर आफूभित्र समाहित गर्नुभयो। शक्ति, ज्ञान, मातृत्व, क्रिया, प्रेम, अधिकार, धन, भावना र संहारका शक्तिहरूलाई एकीकृत गरी एक पूर्ण शक्तिको निर्माण गर्नुभयो र ती शक्ति शिवमा समाहित भए । रामनवमीको महत्त्वको विषयमा 'गार्ग्यतन्त्र कृष्णवचन'अनुसार चैत्र अष्टमीका दिन अष्टमातृकालाई विधिपूर्वक पूजा गरिसकेपछि नवमीका दिन रामचन्द्रको पूजा गरी जप, पाठ, ध्यान गर्नाले मनले चिताएको कार्य सफल हुनेछ । ब्रर्ताक नामक धर्मग्रन्थमा अगस्त्यसंहितामा यस्तो बयान गरिएको छ– चैत्रशुक्ल नवमी रामचन्द्र जन्मनुभएको दिन हो । त्यसैले यो दिन व्रत, उपवास बसी श्रद्धाभक्तिपूर्वक भगवान् श्रीरामचन्द्रको पूजा गर्नाले अनेक जन्मको पाप नाश भई वैकुण्ठ वास हुन्छ ।

यो दशैंको महत्त्वबारे वर्षकृत्य प्रदिपक नामक धर्मग्रन्थमा चैत्रशुक्ल अष्टमीका दिन भवानी उत्पन्न हुनुभएको दिन हो । यस दिन भवानीको पूजा गरी विधिपूर्वक पर्वोत्सव मनाइएमा रोग, शोक हटेर गई सधैं आनन्द र सुख हुनेछ भन्ने उल्लेख छ । यस दिन अशोकको फूल खानाले रोक, शोक आदि नाश हुन्छ भन्ने शास्त्रवचन पालना गर्दै मानिसहरू शास्त्रोक्त मन्त्रोचारण गर्दै अशोकको फूल खाने गर्दछन् ।

जय गुरुदेव !

# चैत्र महिनाका एकादशी व्रतहरू

## कृष्णपक्षको पापमोचनी एकादशी

एकपटक महर्षि च्यवनका छोरा मुनिवर मेधावीलाई मोहित गर्ने उद्देश्यले मञ्जुघोषा नामक अप्सरा चैत्ररथ वनमा गइन् । उनी मुनिको आश्रमदेखि एक कोस टाढैं बसिन् । त्यहाँ उनले अति मोहित पार्ने तान छोडिन् । संयोगवश मेधावी मुनि आफ्नो आश्रमबाट उतै जाँदै थिए । उनले जब मञ्जुघोषाको मोहक स्वर सुने, उनी स्वर आएतिरै लागे । मञ्जुघोषाको सुन्दर रुप देखेर उनी वशीभूत भए । मञ्जुघोषाले उचित अवसर देखेर उनलाई मोहक पाशमा बाँधिन् । मुनिलाई रात र दिनको कुनै होश रहेन । यसप्रकार धेरै वर्ष बित्यो । एकदिन मञ्जुघोषाले जानका लागि आज्ञा मागिन् । तर मुनिलाई यस्तो लागिरहेको थियो कि अहिलेसम्म एकदिन मात्रै बितेको छ । उनले भने– बिहान हुन दिनू, म संन्ध्या गर्छु, तब जानू । अप्सराले मुस्कुराएर भनिन्– अहिलेसम्म सैकडौं संन्ध्याहरू बितिसेकेका छन् । मुनि छक्क परे । दिमागमा बल दिएपछि थाहा भयो कि त्यतिबेलासम्म सन्ताउन्न वर्ष बितिसकेको थियो । मुनिलाई ज्ञात भयो कि उनको तपस्यामा मञ्जुघोषाको त्यो बिघ्न हाल्ने योजना थियो जुन सफल भयो । उनले मञ्जुघोषालाई श्राप दिए– तिमीले मेरो तप नष्ट गर्‍यौ अतः तिमी पिशाचिनी हुन परोस् । उनको अति नै अनुनयविनयबाट प्रभावित भएर मुनिले श्रापोद्धारको उपाय बताउँदै भने– चैत्र कृष्णपक्षको एकादशीको नाम पापमोचनी हो । यसको अनुष्ठानबाट तिम्रो पिशाचता जानेछ । म पनि यसै व्रतको अनुष्ठानबाट आफ्नो पापलाई दूर गर्छु ।

दुवै पापमोचनी एकादशी व्रतको अनुष्ठान गरेर पापबाट मुक्त भए । मञ्जुघोषा पिशाचिनीबाट पुनः अप्सरा बने र मेधावी फेरि पहिलेजस्तै चम्किए ।

## शुक्लपक्षको कामदा एकादशी

नागपुरमा पुण्डरीक नामक एक विषधार नागदेवता थिए । त्यहाँ वीरधन्वा नामक गन्धर्वकी छोरी ललिता नामकी एउटी अप्सरा पनि रहन्थिन् । उनको पतिको नाम ललित थियो । दुवै एक अर्काप्रति अनुरक्त थिए । एकछिन पनि एकअर्काबिना रहन सक्दैनथे ।

एकपटक नागराजले मनोरञ्जनका लागि नृत्य र गायनको आयोजना गरे । ललिता पनि कार्यक्रममा थिइन् । ललित सावधानीपूर्वक गाइरहेका थिए । यसका बावजूद पनि उनलाई ललिताको स्मरण भएरै छोड्यो । वियोगको कारण उनी लड्खडाए र जिब्रो लरबराए । यसबाट नागराज रिसाए । उनले श्राप दिए– तिमीले राक्षस हुन परोस् । तत्क्षण ललित राक्षसमा परिवर्तन हुन गए । उनको जिउडाल, अनुहार र मन विकराल हुन गयो । उनले ललिताको अनुराग पनि बिर्से । ललिताको शोकको कुनै सीमा थिएन । उनी रुँदै आफ्ना पतिको पछि पछि घुम्दै बस्न थालिन् । उनका पति जंगलमा गएका थिए । त्यहाँ ललिताले एउटा आश्रम देखिन् । आश्रममा पुगेपछि उनलाई शान्ति मिल्यो । ललिता मुनि नजिक गइन् र प्रणाम गरेर रुन लागिन् । उनले बिस्तारै आफ्नो दुःख बताइन् ।

मुनिले बताए– छोरी ! आज चैत्रमासको शुक्लपक्षको कामदा एकादशी तिथि हो । तिमी आज व्रत बस र यसबाट प्राप्त हुने पुण्यलाई आफ्ना श्रीमान्लाई देऊ । त्यसबाट तिम्रो श्रीमान्लाई श्रापबाट मुक्ति मिल्नेछ, चिन्ता नगर । ललिताले विधिपूर्वक कामदा एकादशीको व्रत लिइन् । द्वादशीका दिन मुनिको सामुन्ने आफ्ना पतिको उद्धारका लागि भगवान्सित प्रार्थना गरिन्– भगवान् ! मैले जुन कामदा एकादशीको अनुष्ठान गरेकी छु, त्यसको प्रभावबाट मेरो श्रीमान्को राक्षसभाव दूर होस् । ललिताको त्यस पुण्य संकल्पपछि तुरुन्तै उनका पतिको राक्षसभाव छुट्यो । व्रतको प्रभावबाट दुवैको स्वरुप अझै सुन्दर हुन गयो ।

यसप्रकार कामदा एकादशी व्रतको अनुष्ठानबाट ब्रह्महत्या आदि पापको नाश हुन्छ र पिचाशत्व आदि दोषहरूको निवृत्ति हुन्छ ।

जय गुरुदेव !

# काठमाण्डू शिविर, नेपाल

*(गुरुदेव श्री अरविन्द श्रीमालीद्वारा सम्पादित एवं प्रकाशित नारायण मन्त्र साधना विज्ञान, मार्च ०११ को तन्त्र साधना विशेषांकमा गत माघ २२ र २३ गते नेपालमा सम्पन्न अन्तर्राष्ट्रिय साधना शिविर र पूजनीय गुरुमाता भगवती देवी श्रीमालीज्यूको राष्ट्रिय अभिनन्दन समारोहको बारेमा विस्तृत विवरण प्रकाशित गरिएको छ। ऐतिहासिक एवं अद्वितीय उक्त कार्यक्रमको शुभारम्भ, त्यसपछिको घटनाक्रम, कार्यक्रम सफल पार्न पुऱ्याउनु भएका कार्यकर्ता साधकहरुको चर्चा, कार्यक्रमको भव्यता र दिव्यता आदिको विवेचना समेटिएको उक्त विवरणले सम्पन्न उक्त कार्यक्रमहरुको स्मरण गराइरहन्छन्। यदाकदा मात्रै सम्पन्न हुने त्यस्तो अविस्मरणीय कार्यक्रमको विवरणलाई अनुवाद गरी यहाँ प्रकाशित गरेका छौं।)*

चैतन्य तीर्थ बाबा पशुपतिनाथको नगरी काठमाडौं, जहाँ सद्‌गुरुदेवले आजभन्दा २० वर्ष पूर्व फेब्रुअरी १९९१ मा आउनु भयो र ज्ञानज्योति जगाएर बीजारोपण गर्नुभएको थियो। त्यसबेला उहाँले भन्नुभएको थियो, 'यस बीजले आउने वर्षहरूमा रूख बनेर लाखौं मानिसलाई छायाँ प्रदान गर्नेछ र पूरा नेपाल सिद्धाश्रम बन्न जानेछ।' यस भव्यतम् शिविरलाई देखेर सिद्धाश्रम स्वयं काठमाडौंमा उत्रेको छ जस्तो लागिरहेको छ।

४ फेब्रुअरीको त्यस शुभ दिनमा जब पूजनीय माताजी एवं पूज्य गुरुदेव अरविन्दजीले काठमाडौंको धरतीमा आफ्नो चरण राख्नुभयो, काठमाडौंको विमानस्थल पूज्य माताजी र पूज्य गुरुदेवको जयकारको जयघोषले गुञ्जिएको थियो। विमानस्थलमा असंङ्ख्य साधकहरूले उहाँहरूको जसरी हार्दिक स्वागत गरेका थिए, त्यो अभूतपूर्व थियो। त्यहाँबाट गुरुदेवको विश्रामस्थल होटेल ह्यातसम्म साधकहरू पङ्क्तिबद्ध भएर कार एवं मोटरसाइकलमा जयघोष गर्दै गएका थिए।

दोस्रो दिन प्रात: माताजी एवं गुरुदेव महायोगी गुरु गोरखनाथको मन्दिर जानुहुँदा शोभायात्राका लागि फूलैफूलले सुसज्जित हात्ती पूज्य गुरुदेवको आगमनको प्रतीक्षा गरिरहेका थिए। गुरु गोरखनाथको मन्दिर पुग्नासाथ त्यहाँ उपस्थित हजारौंको संङ्ख्यामा शिष्यशिष्याहरू र गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमका विद्यार्थीहरूले पूजनीय माताजी एवं पूज्य गुरुदेवको जयकार गरेर त्यहाँको वातावरणलाई मनोमुग्ध गरेका थिए। सबैमा गुरुदेवप्रति अटुट आस्था, श्रद्धा, प्रेम एवं केही गर्ने आकांक्षा र आँखामा प्रेमको आँशु छल्किएको देखिन्थ्यो।

पूजनीय माताजी र पूज्य गुरुदेवले मन्दिरमा पूजाअर्चना गर्नुभयो र फेरि बाहिर आएर माताजीले हात्तीलाई तिलक लगाइदिएर फल खुवाउनु भयो। हात्तीले आफ्नो सूँढ उठाएर माताजीको अभिनन्दन गरे। मानौं ऊ भनिरहेको छ कि आज माता भगवतीको स्पर्श र आशीर्वादबाट जीवन सफल भएको छ।

गुरुदेव अरविन्दजी हात्तीमा विराजमान हुनुभयो र शोभायात्रामा उपस्थित शिष्य लाम लागेर पूज्य गुरुदेवको जयकार गर्दै अगाडि बढ्यो। यस्तो दृश्य देखेर नेपालका नागरिक अचम्भित थिए। यस्तो भावपूर्ण वातावरण, यस्तो जनसमूह जहाँ एउटै इष्ट भनेको केवल गुरुदेव हुनुहुन्थ्यो। छात्राहरूले अष्टमातृका नृत्य प्रस्तुत गरेको देख्दा माताजी त मन्त्रमुग्ध हुनुभयो। यसरी नै भैरवनृत्य र विद्याश्रमका विद्यार्थीहरूले किसिम किसिमका नृत्य एवं संगीत प्रस्तुत गर्दै शोभायात्रालाई अगाडि बढाउँदै लगे। करिब दुई किमि लामो शोभायात्रा लामबद्ध एवं व्यवस्थितरुपमा अगाडि बढ्दै करिब साढे दुई घण्टापछि शिविरस्थल वनकाली पशुपति क्षेत्र पुग्दा त्यहाँको पण्डाल नेपालका भाइबहिनीहरूबाट पहिले नै भरिएको थियो। त्यहाँ माताजी पुग्नासाथ वातावरण जयकारले गुञ्जियो एवं माताजी एवं गुरुदेव मञ्चमा विराजमान हुनासाथ नै सिद्धाश्रम स्वयं नै हिमालयबाट झरेर हिमालयको तटवर्ती प्रदेश नेपालमा स्थित भएजस्तो लाग्यो। पूरा वातावरणमा परमपूज्य सद्‌गुरुदेवको सूक्ष्म उपस्थिति र चारैतिर फैलिएको सुगन्धमा केही यस्तो कुरा घटित भयो कि जुन अलौकिक, दिव्य एवं चमत्कारपूर्ण थियो जसलाई त्यहाँ उपस्थित शिष्यहरू र साधकहरूले स्वयं देखे र अनुभव गरे। यस्तो लाग्दथ्यो कि सद्‌गुरुदेव निखिलेश्वरानन्दजी स्वयं उपस्थित भएर अरविन्द गुरुदेवलाई आशीर्वाद दिँदै भनिरहनु भएको छ, 'मैले लगाएको बिरुवालाई राम्रोसित सिँचेर यसलाई वटवृक्ष बनाउनु छ। यही तिम्रो कर्तव्य हो।' माताजीको दर्शनबाट त्यहाँ उपस्थित हरेक शिष्यको मनमा उत्साह एवं संकल्प देखिएको थियो। यस्तो लागिरहेको थियो कि सद्‌गुरुदेवको वरदहस्त आशीर्वाद मुद्रामा उठेको छ र सबै शिष्यहरूमा आशीर्वादको अमृत वर्षा गरिरहनु भएको छ। साधनास्थल वनकाली पशुपति क्षेत्रमा उपस्थित शिष्यहरू गुरुदेव अरविन्दजीको प्रवचन सुन्नका लागि

उत्साह एवं उत्सुकताले प्रतीक्षारत थिए ।

सक्षम गुरु कस्तो हुन्छ भन्ने पहिलोपल्ट महसुस भयो । यदि साधकहरूको चाहना, समर्पित शिष्यहरूको सेवा र भावना यी सबै मिलेमा कस्तो स्मरणीय बन्छ भन्ने सिकायो त्यहाँको वातावरणले जसको वर्णन शब्दको माध्यमबाट सम्भव छैन ।

यसपछि नेपालका उपराष्ट्रपति सम्माननीय श्री परमानन्द झाको आगमन भयो र आयोजक समितिका अध्यक्ष श्री रामजी अर्यालले उहाँको स्वागत गर्नुभयो र सद्‌गुरुदेवलाई प्रणाम गरेर सद्‌गुरुको हाम्रो जीवनमा महत्त्वको बारेमा प्रकाश पार्नुभयो । त्यसपछि सम्माननीय उपराष्ट्रपतिले नेपालका सम्पूर्ण जनताको तर्फबाट पूजनीय माताजीलाई सल ओढाएर फूलको मालाले उहाँको स्वागत गर्दै सम्मानपत्र प्रदान गर्नुभयो । माताजीले उहाँलाई आशीर्वादस्वरुप पारद शिवलिंग उपहार दिनुभयो र गुरुदेव अरविन्दजीले 'नारायण मन्त्र साधना विज्ञान जोधपुर (राज.)' को तर्फबाट सद्‌गुरुदेवरचित ग्रन्थ उपहार दिनुभयो र गुरुमन्त्र लिखित चैतन्य सल ओढाएर उहाँको सम्मान गनुहुँदै उहाँको उन्नतिको कामना गर्नुभयो । आफ्ना आशीर्वचनमा गुरुदेव अरविन्दजीले भन्नुभयो, 'सम्माननीय उपराष्ट्रपतिजीले आफ्नो व्यस्त कार्यक्रमहरूबाट जुन समय निकाल्नुभयो, यो उहाँको धार्मिक भावना एवं आस्थाको प्रतीक हो । जहाँका जनता एवं राष्ट्रप्रमुख यस्तो आध्यात्मिक, आस्थावान् एवं ज्ञानवान् छन्, त्यहाँको संस्कृति कहिल्यै पनि नष्ट हुन सक्दैन । त्यसैले नेपालको विश्वमा एउटा अलग पहिचान बनेको छ । मेरो यही आशीर्वाद छ कि नेपालले दिन प्रतिदिन भगवान् पशुपतिनाथको सान्निध्यमा एवं योगी गुरु गोरखनाथले बताउनु भएको मार्गमा हिंडेर आफ्नो गरिमामय चिनारीलाई स्थायी बनाइरोस् र हरेक क्षेत्रमा उन्नति र प्रगतिको मार्गमा अगाडि बढिरहोस्, यही मेरो आशीर्वाद छ, यही मेरो शुभकामना छ ।'

यसपछि सम्माननीय उपराष्ट्रपति श्री परमानन्द झाले पूजनीय माताजी एवं पूज्य गुरुदेव अरविन्दजीलाई नेपालका जनता एवं स्वयंको तर्फबाट हृदयबाटै धन्यवाद ज्ञापन गर्नुभयो र उहाँले यहाँ आएर जुन ज्ञान, साधना एवं आध्यात्मिक चिन्तनको अमृतधारा प्रवाहित गर्नुभयो र उहाँलाई यस्तो गरिमामय दिव्य एवं चैतन्य कार्यक्रममा आमन्त्रित गरेर गौरव प्रदान गर्नुभयो, त्यसका लागि म उहाँलाई धन्यवाद ज्ञापन गर्दछु । उहाँले भन्नुभयो, 'जब सिद्धाश्रम शक्ति केन्द्रका अध्यक्ष श्री रामजी अर्यालले मलाई यहाँ आउने निमन्त्रणा दिनुहुँदा म यस्तो दिव्य वातावरणबाट अनभिज्ञ थिएँ । तर जब मैले सद्‌गुरुदेवद्वारा रचित ग्रन्थहरूको अवलोकन गरेँ, मैले आफूले आफैंलाई यहाँ आउनबाट रोक्न सकिन र यस्ता अद्वितीय महापुरुषको सूक्ष्म उपस्थितिलाई मैले पण्डालमा प्रवेश गर्नासाथै अनुभव गरेँ । जुन आन्तरिक दिव्यताको अनुभूति मैले गरेँ त्यसको साकार रुप त मैले तब महसुस गरेँ जब पूजनीय माताजीले मलाई आशीर्वादस्वरुप पानी पिउनका लागि दिनुभयो र पानी पिउनासाथै मेरो सम्पूर्ण शरीरमा विद्युत प्रवाह भयो र आध्यात्मिक शक्ति कस्तो हुन्छ भन्ने मैले अनुभव गर्न पाएँ । यसलाई शब्दमा व्यक्त गर्न सक्दिन ।'

म त बस यति नै भन्छु कि यस्तो दिव्य एवं चेतनायुक्त व्यक्तित्वको छत्रछायाँमा आयोजित कार्यक्रममा मलाई आउने अवसर प्राप्त भयो । यो मेरो ठूलो सौभाग्य हो र यहाँ उपस्थित नेपालका जनता, जो मभन्दा पनि धेरै सौभाग्यशाली हुनुहुन्छ, उहाँहरूलाई यस्ता योगीको दर्शन एवं सान्निध्य प्राप्त छ । यस्ता योगी पुरुषको ज्ञानले भारत मात्र होइन, सम्पूर्ण विश्वलाई प्रभावित गर्दछ । यस्ता दिव्य पुरुषको शिष्यत्वमा तपाईंहरू सबै यहाँ बस्नुभएको छ । म आफ्नो तर्फबाट तथा नेपाली जनताको तर्फबाट पूजनीय माताजी एवं पूज्य गुरुदेवप्रति आभार प्रकट गर्दछु र यही आग्रह एवं प्रार्थना गर्दछु कि उहाँहरूले पुन: यहाँ आएर यस्तै चेतनायुक्त आध्यात्मिक वातावरणबाट नेपाल एवं विश्वमा शान्ति, समृद्धि, स्थिरता एवं मानवकल्याणका लागि महत्त्वपूर्ण योगदान प्रदान गर्नुहोस् । म आफ्नो तर्फबाट उहाँहरूलाई कोटि धन्यवाद दिन्छु ।'

उक्त कार्यक्रमको संचालन श्री भोजराज रेग्मीले गर्नुभएको थियो । यसपछि सिद्धाश्रम शक्ति केन्द्रका संयोजक बहिनी विन्देश्वरी वरालले माताजीलाई प्रणाम गरेर सबैलाई धन्यवाद ज्ञापन गरेर कार्यक्रमको समापन गर्नुभयो ।

यो दुई दिनको आयोजनामा शिष्यहरूले गुरुदेवको अमृतवचनको आनन्दरस ग्रहण गर्नुभयो । गुरुदेव अरविन्दजीले भन्नुभयो कि जीवनमा विष र अमृत दुवै छन् । उहाँले हामी कसरी गुरुकृपाबाट पूर्ण भएर अमृतमय बन्न सक्छौं भन्ने विषयमा विवेचना गर्नुभयो र भन्नुभयो कि 'भाव' नै गुरु र शिष्यबीचको सेतु हो । अत: 'भाव'बाट

नै शिष्यले गुरुलाई आफूभित्र उतार्न सक्छन् ।

त्यसपश्चात् पूजनीय माताजीले शिष्यहरूको विशेष भावपूर्ण आग्रहमा पहिलोपटक करिब अढाईहजार शिष्यहरूलाई स्वयंले गुरुमन्त्र प्रदान गरेर नयाँ इतिहास रच्नुभयो । गुरुदेव अरविन्दजीले करिब उत्तिनै संख्याका शिष्यहरूलाई अष्टलक्ष्मी साधना एवं शिवलक्ष्मी साधना सम्पन्न गराउनु भएर एवं डेढ हजारभन्दा बढी शिष्यहरूलाई शक्तिपात दीक्षाहरू प्रदान गर्नुभएर सद्‌गुरुदेव निखिलद्वांरा प्रवाहित ज्ञान एवं मन्त्र साधनारुपी गंगामा एउटा नयाँ ऐतिहासिक अध्याय जोड्नुभयो एवं इन्द्र-वैभव कुबेर दीक्षा, धूमावती दीक्षा, छिन्नमस्ता दीक्षा र अन्य दसौं महाविद्याहरूको दीक्षा प्रदान गर्नुभयो र विभिन्न प्रयोगहरू सम्पन्न गराउनुभयो ।

सर्वाधिक आनन्दको विषय तब भयो जब सिद्धाश्रम शक्ति केन्द्रद्वांरा सद्‌गुरुदेवको नाममा स्थापित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा पूजनीय माताजी एवं पूज्य गुरुदेव अरविन्दजी पाल्नुभयो एवं गुरुदेवले करिब ४ सय विद्यार्थीहरूलाई सरस्वती दीक्षा प्रदान गरेर उनीहरूलाई उज्ज्वल भविष्यको आशीर्वाद प्रदान गर्नुभयो । उहाँले विद्यार्थीहरूलाई संकेत गरेर भन्नुभयो कि सत्य र धर्मको मार्गमा हिँडेर आफ्नो, आफ्ना गुरुको, आफ्ना मातापिताको र देशको नाम राख्नुपर्छ । यसबाट उपस्थित शिष्यसमुदायमा विद्युत लहर दौडियो । गुरुदेवले भन्नुभयो कि उपस्थित यी बच्चाहरू नै हाम्रा भविष्य हुन् जसले पछि गएर यस सिद्धाश्रम साधक परिवार एवं देशको नामलाई अगाडि बढाउनेछ । यस्तो भावपूर्ण थियो त्यहाँको वातावरण । यो थियो त्यस सिद्धाश्रम शक्ति केन्द्रद्वारा संचालित विद्याश्रम जहाँको वातावरण पूर्ण आध्यात्मिक एवं सद्‌गुरुदेवको जीवन चरित्रबाट ओतप्रोत छ । यस विद्यालयमा दिनको शुभारम्भ गुरुमन्त्रबाट, भोजनको प्रारम्भ गायत्री मन्त्रबाट एवं कक्षामा अध्ययनको प्रारम्भ गुरुको चिन्तनबाट हुन्छ । यहाँको पाठ्यक्रममा परमपूज्य सद्‌गुरुदेवको जीवनवृत्तान्तलाई एवं योग, ध्यान, पूजन, हवन आदिलाई पनि सामिल गरिएको छ । यहाँका विद्यार्थी भेट्ने बेलामा हेलो, हाइ, नमस्ते, गुड मर्निंगको स्थानमा जय गुरुदेवको सम्बोधनबाट आपसमा मिल्छन् । यस्ता विद्यार्थी, यस्तो पाठ्यक्रम, यस्तो गायत्री मन्त्रको उच्चारण गरेर भोजनको प्रारम्भ हुनुजस्ता कुराले सबैको मनलाई मोहित गरेको छ । यो नेपालमा मात्रै नभएर विश्वमा नै पहिलो आफनो किसिमको विद्यालय हो । त्यहाँका संचालक साधुवादका पात्र हुनुहुन्छ ।

य सपछि जब माताजी एवं गुरुदेव गुरुसेवा आश्रम पुग्नुभयो त्यहाँको स्वागत देखेर उहाँहरू प्रसन्नताले भरिपूर्ण हुनुभयो । यस्तो दिव्य एवं सुन्दर वातावरण थियो गुरु सेवा आश्रमको ।

यस्तो अद्‌भूत शिविरको आयोजनालाई देखेर ज्ञात हुन्छ कि जीवन्तता, रसमयता र चैतन्यता कस्तो हुन्छ ? यो त त्यहाँ उपस्थित साधकले मात्रै जान्न सक्दछ । यसको अभिव्यक्ति सम्भव छैन किनकि यो आनन्द अव्यक्त छ, अनिर्वचनीय छ, जसलाई शब्दमा बाँध्न सकिन्न, केवल अनुभव गर्न सकिन्छ ।

गुरुकार्य दिव्य हुन्छ । यसलाई बुझ्नु सामान्य मान्छेको सीमाभन्दा पर छ । यस शिविरको भव्यता, उच्चता र दिव्यतालाई बनाइराखनमा कार्यकर्ताहरूले महत्त्वपूर्ण भूमिका निभाएका थिए । यसमा प्रमुख योगदान थियो– रामजी अर्याल, विष्णु नेउपाने, विन्देश्वरी वराल, शकुन्तला तिमिल्सिना, हरि भट्टराई, देवेन्द्र विक्रम, भोजराज रेग्मी, कुलबहादुर कार्की, प्रभुसुन्दर श्रेष्ठ, मेघराज घिमिरे, विष्णु सापकोटा, किशोर अकेला, बुद्धिराज भण्डारी, दशरथ थापा, शालिग्राम सिलवाल आदि जसको अथक प्रयास, लगन, निस्वार्थ सेवा एवं अनुशासनबाट यो ऐतिहासिक शिविर सम्पन्न हुन सक्यो । यी शिष्यहरूले देखे कि समर्पण कस्तो हुन्छ । यति थोरै समयमा यति भव्य आयोजनाले यस कुरालाई संकेत गर्दछ कि शिष्यले यदि चाहन्छ भने गुरुकृपा प्राप्त गरेर के मात्रै गर्न सक्दैन ?

यहाँ उपस्थित सबैले सद्‌गुरुदेवको सूक्ष्म उपस्थिति एवं आशीर्वादको अनुभव गर्नुभयो । यस्तो सुन्दर आयोजनाका लागि पूज्य माताजीले एवं पूज्य गुरुदेव अरविन्दजीले सबै आयोजकलाई हृदयबाटै आशीर्वाद प्रदान गर्नुभयो । यहाँ धेरै कर्मठ शिष्य र कार्यकर्ताहरूको नाम प्रकाशित हुन सकेन जसले मौन रहेर आफ्नो सेवा कार्यलाई गर्नुभयो, उहाँहरूको नाम माताजी एवं गुरुदेवको हृदयमा अवश्यै अंकित छ किनकि उहाँहरू सबै नेपाल सिद्धाश्रम साधक परिवारका जग हुन् । जो भलै नदेखियोस् तर घर त जगमाथि नै टिकेको हुन्छ । ती सबैलाई पूज्य माताजी एवं पूज्य गुरुदेव अरविन्दजीले पूर्ण हृदयबाट आशीर्वाद प्रदान गर्नुभएको छ ।

जय गुरुदेव...

# श्री श्री महायोगी गुरु गोरखनाथ

परब्रह्म परमात्माको सुन्दर सृष्टिलाई सुव्यवस्थित पाराले अगाडि बढाउन विभिन्न रुपबाट देवीदेवता, ऋषिमुनि, मानव, पशुपंक्षी, वनस्पति आदि सम्पूर्ण जीवहरूले आ-आफ्नै रुपबाट सहयोग गरिरहेका हुन्छन् । सृष्टिलाई सधैं सन्तुलित राख्न बेला बेलामा विभिन्न अवतारी पुरुषहरूले अवतार लिएका पाइन्छन्, विभिन्न योगी, महायोगीको अवतरण बढ्न थाल्छ । जब देवीदेवताको विश्वासमाथि शंका, उपशंका हुन थाल्छ, अध्यात्मशक्तिमाथिको विश्वास घट्न थाल्छ, तब परब्रह्मले सृष्टिलाई सन्तुलित राख्न दिव्यतम् महापुरुषहरूलाई जगतमा अवतारको रुपमा, अवतरणको रुपमा पठाएको पाइन्छ । प्राचीन युगदेखि नै यस क्रमलाई निरन्तरता दिइएको पाइन्छ । सत्ययुगमा पनि जब जब सत्यमाथि नै शंका हुन थाल्यो, शक्तिको भरमा सत्यतालाई कुल्चिने, सत्यतालाई छायामा पार्न खोजियो, त्यतिबेला परब्रह्मले अवतार लिई दिशा निर्देश गरेको पाइन्छ । यसरी सत्ययुगमा पनि थुप्रै योगी, महायोगी, अवतारले सत्यतालाई विजय गराई सन्तुलित गराएको पाइन्छ ।

त्यस्तै त्रेतायुगमा पनि जब जब दानवीय प्रवृत्तिको बोलवाला बढ्न थाल्यो, शक्तिको भरमा दैवीशक्तिको नै दुरुपयोग हुन थाल्यो, भगवान्का भक्तहरूमाथि अन्याय, अत्याचार बढ्न थाल्यो, सत्यतामाथि प्रश्नचिह्न लाग्न थाल्यो, परब्रह्मले विभिन्न योगी, महायोगीहरूका साथमा भगवान् रामको रुपमा अवतार लिई यस युगलाई सन्तुलित बनाउनुभयो । दानवीय शक्तिहरूमाथि विजय प्राप्त गरी दैवी शक्तिलाई स्थायित्व गर्नुभयो । सामाजिक नीति नियमहरू मर्यादाहरूलाई व्यवस्थित पार्नुभयो । यसरी यस युगलाई स्पष्ट मार्ग देखाई परब्रह्मको सुन्दर सृष्टिलाई सुन्दर राख्न सहयोग गर्नुभयो । त्यस्तै, फेरि जबसम्म सृष्टिको द्वापरयुगमा पुनः दानवीय शक्तिको बोलवाला बढ्न थाल्यो, अधर्म, पाप बढ्न थाल्यो, सत्यता, धर्ममाथि खेलवाड हुन थाल्यो, शक्तिको भरमा शोषण हुन थाल्यो, दैवीशक्तिको

अस्तित्व संकटमा पर्न थाल्यो, फेरि परब्रह्मले भगवान् श्रीकृष्णको रुपमा अवतार लिई द्वापरयुगलाई उचित मार्ग देखाउनुभयो। भगवान् श्रीकृष्णले दानवीय शक्तिलाई परास्त गरी सत्यताको विजयका लागि सदैव तत्पर रहनुभयो। यसरी द्वापरयुगमा पनि सत्यता र सद्गुरुको महत्त्वलाई, दैवीशक्तिको महत्त्वलाई प्रकाश पार्नुभयो। यसरी विभिन्न युगमा विभिन्न रुपमा अवतार लिई सृष्टिलाई सन्तुलित पारिएका घटनाहरू हाम्रा धर्म शास्त्रहरूमा स्वर्णिम अक्षरले लेखिएका छन्।

भगवान् श्रीकृष्णको अवतरणको पच्चीस सय वर्षपछि पुनः सृष्टिमा सत्यतामाथि, धर्मकर्ममाथि प्रश्नचिह्न लाग्न थाल्यो, सृष्टिको सन्तुलनमा उतारचढाव आउन थाल्यो। दैवीशक्तिको दुरुपयोग हुन थाल्यो, परिस्थिति अशान्त र अस्थिरताले सबैतिर अन्यौल बढ्न थाल्यो, तब भगवान् बुद्धको रुपमा भगवान्ले अवतार लिनुभयो। सत्यताको विजयको लागि उपदेश दिन थाल्नुभयो। अस्थिरता, अन्यौल, अशान्त समाजमा शान्तिको सन्देश दिनुभयो। बाहिरी संसारमा होइन, आफूभित्रबाट वास्तविक शान्ति प्राप्त गर्नु पर्दछ भनी ध्यानका विधिहरू प्रकाश पार्नुभयो।

यसरी अगाडिका समयहरूलाई सरसर्ती हेर्दा अवतारी पुरुषहरूले आ-आफ्नो समय कालखण्डमा सत्यताको लागि, समाजको आवश्यकतालाई परिपूर्ति गर्दै निर्देशित गरेको पाइन्छ। आ-आफ्नो क्षेत्रअनुसार कार्य गरेको पाइन्छ। अवतारी पुरुषहरूले विभिन्न युगमा एक विशेष उद्देश्यका साथ अवतरण भएर कार्य गरेको पाइन्छ। उहाँहरूको अवतरण जगतको एक विशेष आवश्यकता परिपूर्तिको माध्यम बनेको पाइन्छ। इतिहासलाई मूल्यांकन गर्दा अवतारी पुरुषहरूलाई पनि साथ दिन उहाँहरूको लागि आवश्यक वातावरण बनाउन विभिन्न अन्य दिव्यात्माहरूको पनि अवतरण भएको पाइन्छ। अवतारी पुरुषहरूलाई ज्ञान दिन, सांसारीक नियमभित्रबाट महामानव बनाउन विभिन्न योगी, महायोगी ऋषिमुनि आदिको अवतरण भएको पाइन्छ। उहाँहरूको योगदानको पनि कम महत्त्व देखिँदैन।

सान्दीपन, वशिष्ट, विश्वामित्र, अष्टावक्रलगायतका थुप्रै ऋषि महर्षिहरूको आ-आफ्नै विशिष्ट महत्त्व रहेको पाइन्छ। यसै शृङ्खलामा श्री गोरक्षनाथको प्रसंगलाई पनि यहाँ चर्चा गर्न खोजिएको छ। आदि, अनादिकालदेखि सर्वत्र पूजित देव, मानव, ऋषिमुनि, अवतारी पुरुष आदि सम्पूर्णका परम आदरणीय रहनुभएका गुरु गोरखनाथको आध्यात्मिक क्षेत्रमा आफ्नै विशिष्ट स्थान रहँदै आएको पाइन्छ। सत्य, त्रेता, द्वापर, कलि चारै युगमा गुरु गोरखनाथको दिव्यता, उच्चताको महिमा योगी, महायोगी, ऋषिमुनिहरूदेखि लिएर अवतारी पुरुषहरूले गाएको पाइन्छ। यसैले पनि गुरु गोरक्षनाथलाई कुन युगको भन्ने ? उहाँको उत्पत्ति, प्रकट आदिको बारेमा स्पष्टरुपमा व्याख्या गर्न सम्भव छैन। आदि अनादि व्यक्तित्वलाई समयको परिधिभित्र राखेर अवश्यै व्याख्या गर्न सकिँदैन किनकि यस्ता कालातीत व्यक्तित्वहरू समय यता पनि हुनुहुन्छ, समयभन्दा उता पनि हुनुहुन्छ। यसैले समयभन्दा पर शब्दचर्चाभन्दा पनि परको व्यक्तित्वको रुपमा गोरक्षनाथलाई लिने गरिन्छ। गोरक्षनाथ को हुनुहुन्छ, उहाँ कसको स्वरुप हुनुहुन्छ, कस्ता खालका व्यक्तित्व हुनुहुन्छ भन्नेबारे देवताहरूलाई पनि कौतुहलता जाग्ने गरेको हुन्छ। यसै प्रसंगलाई प्रष्ट्याउँदै महाकाल योगशास्त्र कल्पद्रुममा गोरक्षनाथ को हुनुहुन्छ भनेर देवताहरूले सोधेको प्रश्नलाई स्पष्ट पार्दै स्वयं महेश्वर भन्नुहुन्छ–

'हे देवताहरू हो ! म नै गोरक्षनाथ हुँ, मभन्दा भिन्न स्वरुप होइन मृत्युको मुखमा गएका प्राणीहरूलाई बचाउनको लागि योगमार्गको प्रचारको लागि गोरक्षनाथको रुप धारण गरेको हुँ।'

यसरी देवताहरूको प्रश्नमा भगवान् शिवले आफू नै गोरक्षनाथ भएको स्पष्ट पार्नुभएको पाइन्छ। यसरी गोरक्षनाथ नै महेश्वरस्वरुप अर्थात् शिवगोरक्षस्वरुप हुनुभएकोले पनि उहाँको दिव्यता र उच्चताको बारेमा चर्चा गर्न सम्भव हुने त कुरै भएन।

गुरु गोरक्षनाथको स्वरुप योगमार्गको प्रचारको लागि, मनुष्यहरूलाई, देवताहरूलाई, ऋषिमुनि, योगीहरूलाई उच्चतामा लैजानका लागि, परमात्मासँग जोड्नका लागि, मोक्षतामा लैजानका लागि भएको हो। भगवान्ले गोरक्षनाथस्वरुप किन लिनुपर्‍यो भन्नेबारेमा शास्त्रहरूमा विभिन्न प्रसंगहरू उल्लेख गरिएका पाइन्छन्। भगवान् शिवले आफूले दिएको वरदान पूरा गर्नका लागि कतै शिवगोरक्षस्वरुप लिनुभएको उल्लेख भएको पाइन्छ भने कतै माता पार्वतीलाई आफ्नो तपस्वी महायोगी दिव्यस्वरुपको

बारेमा जानकारी दिन पनि गोरक्षस्वरुप लिनुभएको प्रसंग पाइन्छ । यससम्बन्धी संक्षेपमा चर्चा गरौं ।

नारदपुराण एवं स्कन्दपुराणमा उल्लिखित प्रसंगलाई अगाडि चर्चा गर्न लागिएको छ। माता पार्वतीलाई अमरकथा सुनाउन भगवान् शिवले एकपटक माता पार्वतीलाई लिएर कैलाशबाट बाहिर निस्कुनभयो । एकान्त ठाउँ खोज्दा खोज्दै भूतनाथ भगवान् महेश्वर महापर्वत लोकालोक पर्वतमा पुग्नुभयो । तीनलोकलाई छुटाउने अत्यन्त दुर्लभ पर्वत जसको जति उचाइ छ, त्यति नै लम्बाइ छ, यस्तो दिव्यतम् पर्वतको एकान्त ठाउँमा भगवान् शिवले माता पार्वतीलाई अमरकथा सुनाउने स्थल चुन्नुभयो । यस्तो एकान्त दिव्यतम् महाशैल मणिहरूले शोभायमान दिव्यतम् पर्वतको वर्णन शब्दचर्चाभन्दा धेरै छ । क्षीरसागरको यस एकान्तस्थानमा मृत्युलाई पनि विजय प्राप्त गर्न सकिने दिव्यतम् ज्ञानको बारेमा भगवान् शिवले माता पार्वतीलाई ज्ञान दिन शुरु गर्नुभयो । यसरी भगवान् शिवले अमरकथा सुनाउँदा सुनाउँदै धेरै समय बितेछ । धेरै समयपछि माता योगनिद्रामा जानु भएछ । भनिन्छ, एक ब्राह्मणले अशुभ तिथिमा जन्मेका आफ्ना बच्चालाई समुद्रमा लगेर फ्याँकेका थिए । उक्त बच्चालाई ठूलो माछाले निलेछ । उक्त माछा घुम्दै घुम्दै उक्त सागरको छेउमा आइपुगेछ जहाँ भगवान् शिवले माता पार्वतीलाई अमरकथा सुनाइरहनु भएको थियो । माता पार्वती गहिरो समाधिमा जानुभएछ अर्थात् योगनिद्रामा हराउनु भएछ । तर पनि भगवान् शिव आफ्नो ध्यानावस्थामा रहेर अमरकथा भनिरहनु भएको थियो । बेला बेलामा माता पार्वती योग निद्रामा भए पनि माछाभित्र रहेका बालकले सही थाप्दै आवाज दिइरहेका थिए । केही समयपछि कथा समाप्त भयो र भगवान्ले आँखा खोलेर हेर्दा माता पार्वती योगनिद्रामा देखेर अचम्म पर्दै, 'अहिलेसम्म आवाज दिने को हो बाहिर आऊ' भनेर भन्नुहुँदा माछाभित्रका बालकले 'म यस माछाभित्र छु, हजूरले उद्धार गरी बाहिर ल्याई दिनुपर्‍यो' भनी बिन्ती गरेपछि भगवान् शिवले उक्त बालकको उद्धार गरी बाहिर निकाल्नुभयो । बालक भगवान् शिवलाई प्रणाम गरी अगाडि उभिए । भगवान् शिवले बालकसँग सोध्नुभयो । बालकले प्रार्थना गर्दै भन्न थाले, 'हे सर्वशक्तिमान्, हे दयामय, हजूर आफैं सर्वज्ञ हुनुहुन्छ, मैले के भनूँ ? ममाथि कृपा गरी दिव्यज्ञान प्रदान गर्नुभएकोमा कोटिकोटि नमन अर्पण गर्दछु ।'

भगवान् शिवले आदिशक्ति जगदम्बा पार्वतीसँग भन्नुभयो, 'हे शैलराजपुत्री, यो बालक तिम्रो पुत्र हो, यस बालक जगतका प्रधान नेता हुनेछ र सदासर्वदा प्रसन्नचित्त रहनेछ, यिनलाई जित्ने कोही पनि हुने छैन ।'

भगवान् आदिनाथ आशीर्वाद दिँदै भन्नुहुन्छ, 'तिमी मत्स्यको पेटबाट प्रकट भएकोले मत्स्येन्द्रनाथ हौ । जाऊ समस्त लोकमा भ्रमण गर, योगविद्याको विस्तार गर, यही हामी दुवैको आशीर्वाद छ ।'

मत्स्येन्द्रनाथ भन्नुहुन्छ, 'हे, नटराज, करुणाामय, यो सबै हजूरको अनुपमानुग्रह हो, म कृतकृत छु ।'

यसरी महाप्रकाश मत्स्येन्द्रनाथले भगवान् आदिनाथ एवं भगवतीबाट आदेश प्राप्त गरी योगविद्याको विस्तारको लागि, यसलाई बढाउनको लागि अघि बढ्नुभयो । योगविद्याको प्रचारप्रचारप्रसारको लागि योगीराज मत्स्येन्द्रनाथले अखिल भुवनको भ्रमण गर्नुभयो । ठाउँ ठाउँमा घुमेर योगविद्यालाई लोकप्रिय बनाउनुभयो । विभिन्न ग्रन्थहरूको रचना गर्नुभयो । देश, विदेश सम्पूर्ण क्षेत्रमा योगलाई स्थापित गराउनुभयो । यसरी केही काल मत्स्येन्द्रनाथको योग प्रचारमा समय बित्यो । समयको अन्तरालसँगै योगको प्रचारमा गर्दै मत्स्येन्द्रनाथलाई भगवान् आदिनाथको तपस्या गर्ने इच्छा जागेर तपस्यामा बस्नुभएछ । भगवान् आदिनाथको सात्त्विक ध्यानमा स्थित भई, मनोरुपी फूलहरूबाट आराधना गर्दै तपस्यामा हराउन थाल्नुभयो । सिद्धनाथको चिरकालसम्मको पवित्र तपस्याबाट भगवान् आदिनाथ प्रसन्न हुनुभयो र प्रकट हुनुभएर भन्नुभयो, 'हे नित्यनाथ, म तिम्रो तपस्याबाट निरतिशय प्रसन्न छु, स्वेच्छाले वर माग ।' सिद्धनाथ भन्नुहुन्छ, हे प्रभु, हजुर मदेखि प्रसन्न हुनुहुन्छ भने, मलाई वरदान दिन चाहनुहुन्छ भने मैले यसलाई उत्तम अवसर सम्झेको छु । म प्रार्थना गर्दछु कि हजुर मेरो सहायक भई अवतार धारण गर्नुहोस् ।' यस्तो सुनी श्रीमहादेव भन्नुहुन्छ, 'स्वयं आएर तिम्रो सहायता गर्नेछु, तबसम्म योगविद्याको विकास गरी राख ।' यति भनी कैलाशतिर लाग्नुभयो । यसरी भगवान् आदिनाथबाट यस्तो दिव्य आशीर्वाद प्राप्त गरी महायोगी मत्स्येन्द्रनाथ केही समय योग प्रचारमा लाग्नुभयो । यसरी भगवान् शिवको यस वरदान पूरा गर्न गुरु गोरखनाथको रुपमा अवतरण

मत्स्येन्द्रनाथलाई दिइएको वरदानलाई पालन गर्न समयसापेक्ष छ। यसरी भगवान् आदिनाथ मूलनाथले आफ्नो आत्मबललाई दुई भागमा विभाजन गर्नुभयो। एक स्वरुपमा स्वयं पूर्ववत्रुपमा रहनुभयो भने दोस्रो दिव्यतम् स्वरुप गोरक्षनाथको रुपमा परिणत हुनुभयो। दिव्यतम्स्वरुप गोरक्षनाथ एकान्त र निर्जन कुनै विशेष पर्वतको मध्य शुद्धस्थानमा विराजमान भई समाधिस्थ हुनुभयो । महेश्वरानन्द भगवान् गोरक्षनाथको दिव्यतम् तपोबलको प्रतापले उक्त पर्वतराज अनुपरुपले सुशोभित भयो। केही समयपछि योगसम्प्रदायका प्रवर्तक श्री शिवगोरक्षनाथ जुन पर्वतमा ज्ञानमय तपमा विराजमान हुनुहुन्थ्यो, त्यही स्थानमा माता जगदम्बालाई साथमा लिएर भगवान् आदिनाथ शिव उक्त स्थानमा जानुभयो। बाटोमा केही बेर विश्राम गर्दै भगवान् शिवले माता पार्वतीलाई भन्नुभयो, 'हे गौरी, यस पर्वतमा चिरकालदेखि एक महान् परमपुरुष योगीराज समाधिस्थ हुनुहुन्छ, तपाईं गएर दर्शन गर्नुहोस्।' महादेवको वचन सुनी माता भवानी उक्त स्थानमा जानुभयो । भगवान् गोरक्षनाथ समाधिमा बस्नुभएको दृश्य अनगिन्ती सूर्यहरू मिलेर प्रकाश दिइरहेजस्तो देखिन्थ्यो । श्री शिवको पूज्यस्वरुप ठानेर हातमा फूल लिई माताले गोरक्षनाथलाई हृदयबाट आदेश गर्नुभयो । महादेवीले विचार गर्नुभयो र पछि महादेवको पहिलेको वचन स्मरण गर्नुभयो । कतै महादेवले मैले पहिले भनेको कथनको उत्तरको रुपमा यी अचिन्त्य दृश्यहरूको सृष्टि गर्नुभएको त होइन ? वास्तविक सत्यासत्य के हो भन्ने पत्ता लगाउने निश्चय गरी परीक्षाबिना थाहा नहुने निश्कर्षमा पुग्नुभयो। मायाको कार्यमा जीत कठीन हुन्छ, मायाबाट टाढा रहेर यसलाई कसरी जित्न सकिन्छ ? मेरो नाम माया हो, माया नै सबैभन्दा ठूलो शक्ति हो । मैले नै ब्रह्मा, विष्णु आदि देवतालाई वशमा राखिरहेकी छु । मैले कसैलाई वशमा नराखी छोडेकी छैन। उमादेवी महेश्वरानन्द गोरक्षनाथको परीक्षा लिन तत्पर हुनुभयो। योगमायास्वरुप माताले आफ्नो दिव्यतम् मायास्वरुपलाई प्रस्फुटन गरी उत्तम उत्तम जगत मात्रको पदार्थहरूको रचना गरी प्रत्यक्षरुपमा उपस्थित गरेर देखाउनुभयो। विभिन्न मायाका स्वरुपहरू र कुनै पदार्थ पनि बाँकी रहेनन् भगवतीले देखाउन । भगवान् गोरक्षनाथको हुनुपर्ने बाध्यता भयो ।

यस्तै शिव-पार्वतीको एउटा वार्तालापबाट पनि अवतरणको रहस्य केही हदसम्म बुझ्न सकिन्छ । यससम्बन्धी केही चर्चा गरौं ।

आदिनाथ भगवान्को लीलाले माता पार्वतीले भगवान् शिवसँग शक्तिको अहंकार झल्काउँदै विभिन्न प्रश्नहरू उठाउनुभएको थियो । माता पार्वती भगवान् महेश्वरसँग भन्नुहुन्छ, 'हे महादेव, हे आदिनाथ, जहाँ जहाँ हजुर हुनुहुन्छ, त्यहाँ त्यहाँ म पनि छु। मबाहेकको हजुरको कुनै पृथक् अस्तित्व छैन। हे महादेव आदिनाथ, हजुर विष्णु हुँदा म लक्ष्मी हुँ, हजुर ब्रह्म हुँदा म सावित्री हुँ, इन्द्र हुँदा म इन्द्राणी हुँ, हजुर करुण हुँदा म करुणामयी हुँ, हजुर पुरुष हुँदा म प्रकृति, हजुर ब्रह्मरुप हुँदा म माया हुँ, म बाट पृथक् हजुर हुनुहुन्न ।'

जगदम्बाको यस्तो वचन सुनेर भगवान् शिव भन्नुहुन्छ, 'हे महेश्वरी, जहाँ जहाँ तिमी छौ, त्यहाँ त्यहाँ म अवश्य छु, यो वाक्य सत्य हो । तर जहाँ जहाँ म छु, त्यहाँ त्यहाँ तिमी छौ तिम्रो पनि अस्तित्व छ, यो कथन सत्य छैन किनकि जहाँ जहाँ माटोका भाडा छन्, त्यहाँ त्यहाँ अवश्य माटो हुन्छ । तर जहाँ जहाँ माटो छ त्यहाँ माटोको भाडा हुनैपर्छ भन्ने छैन । आकाश सबै पदार्थमा व्यापक छ, सबै पदार्थ आकाशमा व्यापक छैन ।' महादेवले विचार गर्नुभयो कि जगदम्बा पार्वतीको प्रश्नको समाधान एवं योगीराज

समक्ष महामायाका सहस्र प्रयत्न यसप्रकारले अस्त भयो, प्रभावहीन भयो जस्तो कि मध्याह्नको सूर्य । यसरी माताले आफ्नो पराजय स्वीकार गर्नुभयो र शिवगोरक्षको अस्तित्व भएको ठाउँमा आफ्नो पनि अस्तित्व छ भन्ने भ्रमलाई छोड्नुभयो ।

यसरी विभिन्न योगी, संन्यासीदेखि देवीदेवता, महान् व्यक्ति-व्यक्तित्व आदिका प्रसङ्गसँगै गुरु गोरखनाथको सम्बन्ध समेत नेपालसँग अन्योन्याश्रित रहेको पाइन्छ । विशाल नेपालको निर्माणसँगै गुरु गोरखनाथको नाम अझ बढी प्रकाशमा आएको छ । गुरु गोरखनाथ र नेपालको सम्बन्धलाई खोतल्दै गयौँ भने प्राचीन इतिहासमा पनि विभिन्न प्रसङ्गहरूको उल्लेख पाइन्छ । गुरु गोरखनाथको जन्मको बारेमा खोतल्ने हो भने उहाँको उत्पत्तिको बारेमा विभिन्न प्रसङ्गहरू पाइन्छन् । उहाँको जन्मस्थान, बाबुआमा, नातागोता आदिको बारेमा समाज अनभिज्ञ रहेको छ । गुरु गोरखनाथ साक्षात् शिव हुनुभएकोले उहाँको जन्मको एकीन नभएको हो । किनकि जसरी शिव भगवान्‌को न त जन्म, न त आमाबाबु, नातागोता आदिको बारेमा कुनै एकीनका साथ याख्या हुन सकेको छैन, त्यसैगरी गुरु गोरखनाथको जन्म प्रसङ्गबारे पनि धेरै किंवदन्ती, कथा, प्रसङ्ग रहँदै आएको पाइन्छ । प्रत्येक कथा, किंवदन्तीका आ-आफ्नै प्रसङ्ग, आधार भए पनि गुरु गोरखनाथ प्रथमपटक नेपालमा नै प्रकट हुनु भएको हो । गोरखास्थित गोरख गुफा उहाँको प्रकटस्थल हो । यसरी गुरु गोरखनाथ नेपालबाटै प्रथमपटक प्रकट हुनु भएको सत्य-तथ्य-यथार्थता पनि ओझेलमा परेको पाइन्छ । नेपालमा प्रकट हुनुभएको कुरा धेरैलाई थाहा छैन । नेपाल सरकारले पनि यस प्रसङ्गलाई सोधखोज, प्रचारप्रसार गर्ने गरेको पाइँदैन । यसरी नेपालको यस दिव्य धरामा यस्ता महान् व्यक्तित्व भगवान् शिवगोरक्ष प्रकट हुँदा समेत हामी नेपालीले यस ठाउँको महत्त्वलाई बुझ्न नसकेको मान्नु पर्दछ किनकि भारतलगायतका अन्य ठाउँमा यस्ता महायोगी प्रकट हुनुभएको भए त्यस थलोलाई कति प्रचारप्रसार, व्याख्या-विश्लेषण गरिन्थ्यो होला, संसारमा नै चर्चा-परिचर्चाको विषय बन्न पुग्दथ्यो । तर दुःखका साथ भन्नुपर्छ कि यस्तो गहन सम्पत्तिलाई समेत बुझ्न सकेको छैन, आदर-सम्मान गर्न सकेको छैन । सिद्धाश्रम शक्ति केन्द्र, नेपालले गुरु गोरखनाथलाई गुरु मानेर उहाँसम्बन्धी सोधखोज गरी प्रकाशमा ल्याएको पाइन्छ । यस केन्द्रले आफ्नो प्रकाशन 'महायोगीहरूको परिचय' नामक ग्रन्थमा गुरु गोरखनाथको नेपालसम्बन्धी प्रसङ्गहरू उल्लेख गरेका छन् । गुरु गोरखनाथको सम्बन्धमा जान्न खोज्नेहरूका लागि यो ग्रन्थ भरपर्दो सावित हुन सक्छ भन्ने अपेक्षा भने गर्न सकिन्छ ।

गुरु गोरखनाथको नेपालसम्बन्धी विभिन्न प्रसङ्गहरू उल्लेख भएको पाइन्छ । नेपालका राजाहरूले पनि उहाँको आशीर्वाद प्राप्त गरेका विभिन्न प्रसङ्गहरू पाइन्छन् । केही प्रसङ्गहरू यहाँ उल्लेख गरिन्छ– 'आर्दश योगी' नामक पुस्तकमा अक्षयकुमारले नेपालको इतिहासलाई आधार बनाई प्रचलित कथानुसार **चौथौं शताब्दी**को अन्तिम समयतिर नेपालका बौद्ध राजा महीन्द्रदेवलाई पदच्यूत गरी गुरु गोरखनाथले आफ्ना शिष्य/सेवक वसन्तदेवलाई सिंहासनमा विराजमान गराएबाट गुरु गोरखनाथले चौथो शताब्दीमा नै नेपालको इतिहासमा गर्नुभएको कार्यको प्रमाण भेटिन्छ । साथै, नेपालको इतिहासमा हेर्दा राजा नरेन्द्रदेवको पालामा गुरु गोरखनाथको अनादर हुँदा बाह्र वर्षसम्म नागको आसन जमाई तपस्या गर्नुभएको कथा छ । कथानुसार गुरु गोरखनाथ नेपालमा आउनुहुँदा उहाँलाई भीक्षा नदिई अनादर गरिएको आदि कारणले गुरु गोरखनाथले पशुपति, मृगस्थलीमा नेपालको जलस्रोतको आधार मानिने नागहरूमाथि आसन जमाई बाह्र वर्षसम्म तपस्या गर्नुभयो । यसरी जलाधारको मूल स्रोत नागहरूलाई नै वशमा राखिदिनु भएपछि नेपालमा वर्षा हुन बन्द भएर खडेरी पर्‍यो । य४सले गर्दा नेपालको जनजीवन अस्तव्यस्त भयो, देशमा हाहाकार मच्चियो । त्यसपछि तत्कालीन राजा नरेन्द्रदेवले आचार्य वन्धुदत्तको सहयोग लिएर के भएको भन्ने रहस्य खोज्नुभयो । गुरु गोरखनाथ रिसाएर तपस्या गर्दा यस्तो भएको भन्ने थाहा भयो । यसको समाधान गुरु गोरखनाथका पनि गुरु मच्छिन्द्रनाथलाई नेपाल ल्याउन सके हुने भन्ने थाहा भएपछि भारतको कामरुप कामाक्षाबाट गुरु मच्छिन्द्रनाथलाई नेपालमा ल्याइयो र गुरु गोरखनाथ आफ्नो गुरुलाई आदर गर्न उठ्नुहुँदा नागहरू स्वतन्त्र भएर जलवर्षा भयो ।

यसरी गुरु मच्छिन्द्रनाथ आएर वर्षा भएकोले उहाँलाई आदर-सम्मान गरी प्रत्येक वर्ष रथयात्रा पनि संचालन

भएको पाइन्छ। राजा नरेन्द्रदेवको बारेमा स्पष्ट तिथिमिति नभए पनि यो घटना **चौथौँदेखि आठौँ शताब्दी**मा भएको हुनसक्ने अनुमान लगाउने थुप्रै प्रमाण छन् । नेपालकै इतिहासमा हेर्दा द्रव्य शाह (वि.सं. १६१६-१६२६) लाई गुरु गोरखनाथले सत्रौं शताब्दीको शुरुतिर आशीर्वाद दिई गोरखाको राजा बनाउनु भएको घटना उल्लेख छ । द्रव्य शाहपछिको चौथा राजा राम शाहलाई सत्रौं शताब्दीको अन्ततिर गुरु गोरखनाथले आशीर्वाद दिनुभएको ऐतिहासिक प्रमाण भेटिन्छ भने नेपालकै इतिहासमा द्रव्य शाहपछिका एघारौँ पुस्ताका राजा पृथ्वीनारायण शाहलाई अठारौँ शताब्दीमा आशीर्वाद दिनुभएको घटना उल्लेखनीय छ । गुरु गोरखनाथले आशीर्वादस्वरुप दही खान दिनुभएको कारण पृथ्वीनारायण शाहले विशाल नेपालको निर्माण गर्नुभएको प्रसङ्ग पनि नेपालको इतिहासमा स्वर्णिम अक्षरले लेखिएको छ ।

नेपालका विभिन्न शिलालेखहरू, विभिन्न प्रसङ्गहरूमा पनि गुरु गोरखनाथसम्बन्धी उल्लेख भएको पाइन्छ । नेपालको इतिहासमा छैटौं शताब्दीमा नाथ सम्प्रदायको विकास भएको संकेत पाइन्छ। शक संवत् ४५५ र वि.सं. ५९० को भस्मेश्वर अभिलेखमा 'नाथेश्वर' उल्लेख गरिएको छ। त्यस्तै शक्संवत् ४६९ अर्थात् वि.सं. ६०४ रामदेवको पालाको पशुपति मृगस्थलीको शिवलिङ्ग अभिलेखमा पनि 'नाथेश्वर'को उल्लेख गरिएको छ । मृगस्थली गुरु गोरखनाथको तपस्थली भएको र यस्तो शब्दको प्रयोगले गुरु गोरखनाथले त्यतिबेला नै आफ्नो लीला देखाउनु भएको प्रष्ट हुन आउँछ। जयस्थिति मल्लको ने.सं. ४९९ (वि.सं.१४३६) को ताम्रपत्रमा 'देव गोरक्ष' उल्लेख पाइन्छ। त्यस्तै, नेपाल संवत् ५११ (वि.सं. १४४८) फर्पिङ अभिलेखमा 'गोरक्ष पादुकाभ्यां नमः' उल्लेख भएबाट पन्ध्रौं शताब्दीमा नै गुरु गोरखनाथको प्रभाव परिसकेको बोध हुन्छ ।

भनिन्छ, नेपालमा गोरक्ष युग थियो । विदेशी लेखकहरूका अनुसार नेपालमा गोर खा राज्य थियो र त्यहाँ बस्ने गोर्खाली जातिहरू गुरु गोरखनाथलाई नै आफ्ना आराध्यदेव मान्दथे । गोरखा राज्य पनि गुरु गोरखनाथको नामबाट नै रहेको उल्लेख एकातिर पाइन्छ भने अर्कोतिर नेपाली इतिहासकारहरू पनि शाहवंशीय राजाहरूमा उहाँको उच्च किसिमको आदरसम्मान हुने, उहाँलाई आफ्नो पूज्यदेव मान्ने, प्रत्येक कार्य गुरु गोरखनाथलाई सम्झेर मात्र गर्ने र त्यतिबेलाका राजाहरूले पैसामा पनि 'गोरष' लेख्ने गर्दथे भन्ने धारणा राख्दछन् । यसबाट पनि उहाँको कति व्यापकरूपमा प्रसिद्धि थियो भन्ने तथ्य प्रमाणित हुन्छ ।

हालसम्म पनि नेपालको मुद्रामा गुरु गोरखनाथको नाम अंकित भएको पाइन्छ । साथै, पहिले नेपाली रुपैंया, मुद्रामा अंकित निशाना छापमा गुरु गोरखनाथकै पादुका मुद्रित भएको पाइन्छ । यसरी नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी गुरु गोरखनाथकै कृपा, आशीर्वादले नेपालीहरू विश्वमा वीर गोर्खालीको नामबाट गर्व गर्छन् । अंग्रेजहरूलाई खुकुरीको भरमा परास्त गर्नुको पछाडि गुरु गोरखनाथकै कृपाको परिणाम हो भन्दा दुईमत नहोला । तर पनि हामीले उहाँलाई उचित मान, सम्मान, आदर दिन सकिरहेका छैनौं ।

नेपालका विभिन्न जिल्लाहरूमा गुरु गोरखनाथका एवं नाथ सम्प्रदायका सिद्धपीठहरू छन् । काष्ठमण्डपमा रहेको गुरु गोरखनाथको शक्तिपीठ, मृगस्थलीको शक्तिपीठ, मृगस्थलीनजिकै रहेको गोरष गुफा, त्यस्तै बैतडीस्थित श्रीजगन्नाथको मन्दिर, दार्चुलाको श्रीलरिनाथ, कर्णाली प्रदेशमा राजा चन्दननाथको जुम्लास्थित मन्दिर, दाङ चौघेरास्थित सिद्ध राजा रतननाथको मन्दिर, दीपायलको दिलीपेश्वर मन्दिर, पाल्पाको भैरव बाबा भैरवनाथको मन्दिर आदिले नेपालमा नाथयोगीहरूको विकासको पुष्टि गर्दछन् ।

ब्रह्माण्डपुराण हयग्रीव संवाद ललितापुर वर्णनमा उल्लेख पाइन्छ–

तस्य चोत्तरकोणे तु वायुलोको महाद्युतिः ।<br>
तत्र वायुशरीराश्च सदानन्द महोदयाः ॥<br>
सिद्धा दिव्यर्षवश्चैव, पवनाभ्यासिनोऽपरे ।<br>
गोरक्ष प्रमुखाश्चान्ये, योगिनो योगतत्पराः ॥<br>
त्यस्तै,<br>
तस्माद् दक्षिणतो देवि ! गोरक्षाश्रम रक्षकः ।<br>
यत्र सिद्धो महादेवी ! गोरक्षो वसतेऽनिशम् ॥१॥<br>
तल्लिङ्गन्तु प्रवक्ष्यामि, शृणु पुष्यतमं स्थलम् ।<br>
महातप्तजलं तत्र वर्तते, सर्वदैव हि ॥२॥<br>
(स्कन्दपुराण, केदारखण्ड, अध्याय ४२)<br>
शिव पुराण, सप्तम अध्याय–<br>
शिवो गोरक्षरूपेण, योगशास्त्रं जु गोपह ।

यमाद्यङ गै र्यथास्थाने, स्थापिता योगिनोदपिच

गुरु गोरखनाथले समाजमा धेरै किसिमका अद्वितीय कार्यहरू गर्नुभएको छ । सामाजिक, आर्थिक, शैक्षिक क्षेत्रमा उहाँले पुऱ्याउनुभएको महत्त्वपूर्ण योगदानलाई आज पनि सम्पूर्ण विश्व उहाँप्रति नतमस्तक छन् । विशेष गरी उहाँका शैक्षिक योगदानलाई कोट्याउनु पर्दा उहाँले रचना गर्नुभएका विभिन्न ग्रन्थलाई बिर्सन सकिन्न । यी ग्रन्थहरूको अध्ययन हाम्रो जीवनमा नैतिक, धार्मिक, आरोग्यता र शैक्षिक जागरणको माध्यम हुन सक्छन् । 'योगबीज' महाज्ञानले परिपूर्ण ग्रन्थ हो जसमा उहाँका अनुभूतिका प्रसङ्गहरू छन् । उहाँले यस ग्रन्थमा महायोग ज्ञानमाथि प्रकाश पार्नुभएको छ । अहिलेको आधुनिक युगमा जसरी शिक्षक र विद्यार्थीको सम्बन्ध रहेर शिक्षाको प्रचारप्रसार जुन गतिमा भइरहेको छ, गुरु गोरखनाथले पनि गुरु-शिष्य परम्पराबाट शिक्षा, ज्ञानको प्रचारप्रसार गर्नुभयो र गुरु-शिष्य परम्परालाई शुभारम्भ गर्ने उहाँ नै पहिलो व्यक्तित्व हुनुभयो । आज पनि यही परम्परामा नेपाललगायत विदेशमा ज्ञान तथा शिक्षाको अभिवृद्धि भइरहेको छ । गुरु-शिष्य परम्परामा उहाँले महायोगी मत्स्येन्द्रनाथलाई आफ्ना गुरु बनाउनु भएको प्रसङ्ग 'गोरखवाणी'मा उल्लेख गर्नुभएको छ ।

गुरु गोरखनाथ रचित ग्रन्थहरू निम्नअनुसार छन् :

गोरक्ष तक चतुरशीत्यासन, ज्ञानामृत, योगचिन्तामणि, योगमहिमा, योगमार्तण्ड, योगसिद्धान्तपद्धति, अवधूत गीता, गोरक्षकल्प, गोरक्ष कौमुदी, गोरक्षगीता, गोरक्षचिकित्सा, गोरक्ष पंचम, नाडीज्ञान प्रदीपिका, योग सिद्धासन पद्धति, हठसंहिता, योग विषय, शिवसंहिता, शिवयोग दर्पण, शिवयोग सार, शिवयोग सारावली, योग सारावली, योगबीज, अमनस्कमहायोगी, षटचक्र चिन्तामणि, महार्थमञ्जरी परिमलभाष्य, विवेक मार्तण्ड, गोरक्ष पद्धति, सिद्ध सिद्धान्त पद्धति, गोरक्षबोध, नृपबोध, अमरौधशासन, हठयोग प्रदीपिका, आत्मबोध, गोरक्ष सहस्रनाम, सप्ताङ्ग योग विद्या, अष्टाङ्ग योग धारण, कायाबोध, गोरक्षसिद्धान्त । (स्रोत: महायोगीहरूको परिचय) ।

उहाँले दिनुभएका विधिविधानहरू, साधनात्मक पद्धतिहरू, सिद्धान्तहरू, दर्शनहरू नै आज विभिन्नरुपमा प्रयोग भइरहेका छन् । गोरखनाथप्रदत्त हठयोगलाई अवलम्बन गर्नेहरूलाई हठयोगी र यिनै हठयोगीहरू जसले सिद्धान्तलाई पालन गर्दछन्, तिनीहरू नै नाथयोगीका रुपमा रुपान्तरण हुने गर्दछन् ।

गुरु गोरखनाथले सावरमन्त्रको रचना गर्नुभयो जुन मन्त्रहरू अहिले पनि समाजमा यत्रतत्र प्रयोग भइरहेका छन् । व्याकरणको कठिनाइमा नअल्झिई, सरल र जुनसुकै भाषामा पनि सुलभ सावरमन्त्र कुनै पनि समस्याको सटिक उपाय मानिन्छन् । गुरु गोरखनाथले थुप्रै नवीनतम मार्गहरू, आत्मिक खोज अनुसन्धानका विधिहरू समाजलाई दिनुभयो । गुरु गोरखनाथले दिनुभएका हठयोग र सहजयोग अहिले पनि भारत, नेपाल, पाकिस्तान, तिब्बतलगायत अन्य थुप्रै ठाउँमा प्रसारित छन् । यसबाट सामाजिक र धार्मिक जीवन आन्दोलित भइरहेको छ । तान्त्रिक साधनाहरू संकुचिक हुन गई साधना भनेको मासु, मदिरा र मैथुन मानिने समाजमा व्याप्त अन्धविश्वास, व्यभिचार, बलि, जादू, टुनामुना, नारी शोषण, वेश्यावृत्तिजस्ता विकृतिहरूलाई हटाउन यिनीहरूविरुद्ध उहाँले चुनौतीको घोषणा गर्नुभयो । नारीहरूको शोषण र उनीहरूमाथि भइरहेका अत्याचारलाई बुझेर उहाँले यी निकृष्ट क्रियाकलापहरूलाई सुधार्न समाजसँग टक्कर लिनुभयो । यसबाट समाजमा स्त्रीहरूको इज्जत बढ्न गयो । उहाँले पाखण्डवादमाथि प्रहार गर्नुभयो, प्राणीबीच समान व्यवहारका लागि आवाज उठाउनुभयो । सम्पूर्ण धर्मलाई योगमा ल्याएर जोडिदिनु भयो, जहाँ बौद्धधर्मका वज्रयानीहरूदेखि लिएर पाशुपत, शैव, मुस्लिमहरूलाई समेत समेटी मध्यममार्गको अवलम्बन गर्नुभयो । यस कुरालाई डा. जयशंकर मिश्रले ' प्राचीन भारतका सामाजिक इतिहास'मा उल्लेख गर्नुभएको छ । शैव र योगमार्गका सम्प्रदायहरूलाई उहाँले एउटै मार्गमा विलीन गराउनु भयो । समस्त अनार्य मतका उपासकहरूलाई एक बनाई योगमार्गको परिस्कृत प्रत्यक्ष भीक्षुदर्शन र पातञ्जल योगको समकक्ष ल्याएर मिलाइदिनु भयो । यसबाट मुसलमानहरूले समेत जातीयता र कट्टरता भावलाई हटाई योगलाई अंगाल्न थाले ।

यसरी गुरु गोरखनाथ पूरै समाजसँग लड्नुभयो । सयौं संघ, संस्था र सम्प्रदायहरूले गर्न नसकेको सामाजिक उत्थान गरेर देखाउनु भयो । यस्ता व्यक्तित्वप्रति नमन !

अस्तु !

# नाथ सम्प्रदायमा आदेश

नाथ सम्प्रदायको परम्पराभित्र नाथयोगीहरूको अतुलनीय योगदान समाजका लागि सधैं अनुकरणीय रहँदै आएको छ । नाथयोगीहरूले हाम्रो सभ्यता, संस्कृति, साहित्य एवं इतिहासको निर्माणका लागि दिएको योगदानको कारण आज पनि परम्पराहरूले निरन्तरता पाइरहेका छन् । सभ्य एवं आध्यात्मिक समाजको निर्माणका लागि सामाजिक परम्परा, संस्कृति आदिले ठूलो भूमिका खेल्दछन् । इतिहासलाई अध्ययन गर्ने हो भने कैयौं सामाजिक संस्कारभित्र, विभिन्न चलनचल्ती एवं परम्पराहरूभित्र आध्यात्मिक रहस्य लुकेको पाउछौं । यस्ता विषयवस्तुहरूको खोज, अनुसुन्धानको कमीले गर्दा कैयौं सामजिक मान्यताहरू रुढीवादी, अन्धविश्वासका रुपमा नामाङ्कृत हुन पुगेका छन् ।

नाथयोगीहरूको पहिचान दिलाउने विभिन्न परम्पराहरू, चिह्नहरूका बारेमा चर्चा गर्ने क्रममा हामीले नाथयोगीहरूले धारण गर्ने 'नाद'को बारेमा चर्चा गरिसकेका छौं । नादको प्रयोगसँगै प्रयोग हुने एक विशिष्ट सम्मानकारक शब्दको बारेमा यहाँ चर्चा गर्न लागेका छौं । विभिन्न संघ, सम्प्रदायहरूमा अभिवादनको रुपमा आफ्ना आराध्यदेवहरूसँग जोडिएका कुनै विशेष शब्दलाई प्रयोग गरिआएको थुप्रै उदाहरणहरू पाइन्छन् । सामान्यतया हाम्रो सामाजिक परम्परामा आफूभन्दा मान्यजनलाई आफ्नो धर्म, संस्कृति, परम्पराअनुसार विभिन्नरुपले आदर, सम्मान दिने गर्दछौं । आफ्ना नजिकका नातेदारहरूलाई खुट्टामा ढोग्ने चलनदेखि लिएर आफूले मान्नुपर्ने स्तरअनुसार अभिवादनका विभिन्न स्वरुपहरू विभिन्न जातजातिहरूमा फरक-फरकरुपमा पाइन्छन् । सामान्यतया दुवै हात जोडेर नमस्कार गर्ने चलन विद्यालयदेखि लिएर सरकारी एवं अन्य संघ, संस्था आदिहरूमा सामाजिक परम्पराको रुपमा विकसित हुँदै आइरहेको छ भने कैयौं धार्मिक एवं आध्यात्मिक संघ, संस्थाहरूमा पनि आफ्नो पहिचानको लागि एकापसमा अभिवादनको साटफेर विभिन्न शब्दहरूलाई प्रयोग गरी गरेको पाउछौं ।

नाथ सम्प्रदायका योगीहरू एकापसमा एवं आफ्ना आराध्यदेवलाई प्रणाम गर्दा, आदर गर्दा 'आदेश-आदेश' शब्दको प्रयोग गर्दछन् । जहाँ आदेश-आदेश शब्दको उच्चारण सुन्छौं, हामीलाई स्वत: ज्ञात हुन्छ कि यी शब्द उच्चारण गर्नेहरू पक्कै पनि नाथसम्प्रदायका हुन् भनेर । नाथसम्प्रदायमा कानफट्टा योगीहरू र कान नचिरेका गृहस्थ एवं संन्यासी सम्पूर्णमा नै अभिवादनको यो प्रक्रियाले आज पनि जीवन्तता पाइरहेको छ । अन्य संघ, सम्प्रदायभन्दा अलि भिन्नै खालको छ नाथयोगीहरूको यो प्रचलन । नाथयोगीहरू घुमन्ते, फिरन्ते मात्र नभई आध्यात्मिक क्रान्तिका संवाहक थिए । समाजलाई अध्यात्मतर्फ आन्दोलित गर्न एवं आफैं पनि शक्तिसम्पन्न हुनका लागि कुनै एक सीमित ठाउँमा आश्रम बनाई कुटी बनाई बसेर सम्भव थिएन । यसबाट न त आफ्नो विकास हुन सक्थ्यो, न त समाजको नै । यसैले पनि विभिन्न पहाड, गुफा, कन्दराहरू आदि ठाउँहरूमा हिँड्ने यी नाथयोगीहरूले आफूलाई जस्तो ठाउँमा पनि सुरक्षित राख्दै आफ्ना साधना, तपस्याहरू पूर्णरुपमा गर्नका लागि पनि 'नाथ' एवं 'आदेश' शब्दलाई प्रयोग गरेका पाउँछौं । नाथयोगीहरूले प्रयोग गर्ने 'आदेश' शब्द केवल औपचारिक अभिवादन शब्द मात्र नभई आत्मा र परमात्माको सम्बन्धकारक शब्द हो, ब्रह्मस्वरुपको शब्द हो । सूक्ष्मसत्तामा विराजमान आफ्ना परम आराध्यदेवहरूलाई अत्यन्त श्रद्धाका साथ दण्डवत गर्ने प्रथा

छ नाथयोगीहरूमा । नाथयोगीहरूले नादको सहायताले भूमि शुद्धि एवं सूक्ष्म आज्ञा मागी प्रणामको लागि अनुरोध, प्रार्थना गरी आफ्नो दुवै हात मुठ्ठी पारी नमस्कार मुद्रामा जमिनमा राखी हातको बूढीऔँला 'आदेश-आदेश' भनी ढोग्ने परम्परा छ । धेरैलाई यो विधि अचम्म लागे पनि यस्तो परम्पराभित्र लुकेको रहस्य कमैलाई थाहा छ ।

नाथसम्प्रदाय गुरु-शिष्य परम्परामा विकसित परम्परा हो । यसैले पनि नाथयोगीहरू गुरुलाई नै सर्वोपरि ठान्दछन्, गुरुको कृपालाई नै सर्वस्व ठान्दछन्, नाथयोगीहरूले आफ्ना हातका बूढी औँलालाई गुरुको पादुका सम्झन्छन् र आदेश-आदेश भनी साष्टाङ्ग दण्डवत् प्रणाम गर्दछन् र गुरु, आफूभन्दा मान्यजनहरूलाई एवं देवीदेवताहरूलाई पनि यसरी नै प्रणाम गर्दछन् । नाथसम्प्रदाय प्राचीन परम्परा हो । यसैले पनि नाथयोगीहरूले प्रयोग गर्ने विभिन्न चलनले समाजमा पनि गहिरो प्रभाव पारेको पाइन्छ । यसैले समाजका व्यक्तिहरूले पनि आदर गर्ने, सम्मान गर्ने यस चलनलाई अपनाएको पाइन्छ । अझै पनि पहाडमा कसैलाई बढी आदर गर्नुपर्दा झुकेर बूढी औँलामा ढोग्ने चलन छ भने प्रत्येक घरमा बुहारीले ससुरालाई जेठाजुलाई पनि भुइँमा झुकेर नाथयोगीहरूले झैँ ढोग गर्ने परम्परा अझै पनि चलि नै रहेको छ । यसरी जानेर होस् वा नजानेर, यस्ता प्रथाहरूको अनुकरण समाजमा भइरहेको छ ।

नाथयोगीहरूले आफूभन्दा मान्यजनलाई आदर-सम्मान प्रकट गर्दा प्रयोग गर्ने 'आदेश' शब्दभित्र लुकेको गूढ रहस्यको बारेमा हामीले चर्चा गर्दै आइरहेका छौँ । 'आदेश' शब्दलाई परमात्मास्वरुपको सद्वाणीको रुपमा लिइन्छ । 'आदेश' कुनै सामान्य शब्द मात्र नभई यो आफैँमा मन्त्रमय छ, तन्त्रमय छ र पूर्णशक्ति एवं क्षमताले भरिपूर्ण छ । 'आदेश' शब्द नाथयोगीहरूको गर्व हो, सावरपन्थीहरूको शक्तिपुञ्ज हो । यसैले पनि यस शब्दको प्रयोग एक-दुईपटक होइन, बारम्बार भइरहेको पाइन्छ । सावरमन्त्रहरूमा आदेश शब्दलाई पूर्णरुपमा प्रयोग गरेको पाइन्छ । आदेश शब्द बिनाका सावरमन्त्रहरू कमै पाइन्छन् । यसरी मन्त्रहरूमा समेत परमात्मारुपी सद्गुरुको शक्तिस्वरुपको प्रतिनिधित्व गर्ने आदेश शब्दलाई सामान्यरुपमा परिभाषित गर्न मिल्दैन । सिद्धसिद्धान्तपद्धतिमा आदेश शब्दको स्वरुपको बारेमा यसरी वर्णन गरिएको छ–

**आत्मेति परमात्मेति जीवात्मेति विचारणे ।**
**त्रयाणामैक्यसंभूतिरादेश इति कीर्तितः ।**
**आदेश इति सद्वाणी सर्वद्वन्द्वक्षयापहाम् ।**
**यो योगिनं प्रति वदेत् स यात्यात्मानमैश्वरम् ॥**

आत्मा, परमात्मा र जीवात्माको बारेमा विचार गर्ने हो भने यी तीनै एकीकृतरुपमा अभिन्न सत्ता 'आदेश'को रुपमा प्रसिद्ध छ । 'आदेश' परमात्मास्वरुपको प्रतिपादन गर्ने सद्वाणी हो जसको उच्चारण मात्रले जन्ममरण, सुखदुःख, रागद्वेष आदि समस्त प्रपञ्च, द्वन्द्वको नाश हुन्छ । जो प्राणीले योगीहरूप्रति 'आदेश-आदेश' शब्दको प्रयोग गर्दछन्, उनीहरूले परमात्मा र आत्माको अभिन्नस्वरुपको तत्त्व जान्दछन् । यसरी आदेश शब्दको उच्चारण गरेर योगीहरूले जीवात्मा र परमात्माबीचको तादात्म्यलाई स्मरण गराइरहेका हुन्छन् ।

आदेश शब्दको बारेमा मत्स्येन्द्र-गोरख संवादमा गुरु गोरखनाथले सोध्नुभएको प्रसङ्ग पाइन्छ र त्यसको प्रत्युत्तरमा मत्स्येन्द्रनाथले भन्नुभएको छ–

**अवधू आदेसका अनूपम अपदेश**

अर्थात्, आदेश सूक्ष्मातिसूक्ष्म परमात्म पदको प्रतिपादक परम उपदेश हो । यस कथनबाट पनि आदेश शब्दले प्रतिनिधित्व गर्ने स्वरुप एवं यसको साङ्केतिक अर्थको बारेमा केही अन्दाज लगाउन सकिन्छ । 'गोरखवाणी'मा पनि गुरु गोरखनाथले आदेश शब्दलाई यसरी छोटो शब्दमा भन्नुभएको छ–

**ॐ आदेस आदेस अलष अतीतं**

त्यस्तै केन उपनिषद्मा पनि आदेश शब्दलाई परमात्म तत्त्वको साङ्केतिक उपदेशको रुपमा स्वीकारिएको छ –

**तस्यैष आदेशो यदेतद**

(केन उ. ४/४)

महायोगी श्री गुरु गोरक्षनाथले जोधपुराधीश महाराज मानसिंहलाई स्वप्नमा आदेशको तत्वोपदेश दिनुभएको थियो जुन यसप्रकार छ-

नाथार्थोऽस्तु तवादेशो विदेशश्चास्तु वैरिणाम् ।
प्रदेशश्वास्तु भक्तानामुपदेशस्तु मे सदा ॥

त्यस्तै, नृसिंहोत्तरतायिनी उपनिषद्मा पनि आदेशको साङ्केतिक तत्त्वस्वरुपमा शान्त, अद्वैत शिवस्वरुपको प्रतिपादन भएको पाइन्छ–

**अथ तस्यायमादेशी मात्रश्चतुर्थो व्यवहार्य प्रपञ्चोपशमः शिवोऽद्वैत ॐकार आत्मैवसं विशत्यात्मनात्मान य एवं वेद ॥**

(नृसिंहोत्तरतायिनी खण्ड-२)

यसरी विभिन्न ग्रन्थहरूमा आदेश शब्दको बारेमा विस्तृतरुपमा विवेचना गरिएको पाइन्छ ।

# आफ्नो हात आफै हेरौँ

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौँ । आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ ।*

## स्वास्थ्यरेखा

मानवजीवनमा स्वास्थ्यको महत्त्व सबैभन्दा धेरै मानिन्छ । मानिससँग यश, मान, पद, प्रतिष्ठा तथा ऐश्वर्य छ तर ऊसित स्वास्थ्यको कमी छ भने उसका लागि सारा वैभव पनि व्यर्थ हुन्छ । यसैले शास्त्रमा स्वास्थ्यलाई सबैभन्दा उत्तम धन मानिएको छ । हस्तरेखा विशेषज्ञले जीवनरेखाको अध्ययनपछि सबैभन्दा पहिले स्वास्थ्यरेखाको अध्ययन गर्नुपर्छ ।

उत्तम स्वास्थ्यको जीवनका सम्पूर्ण कार्यकलापहरूमाथि प्रभाव पर्दछ । यदि स्वास्थ्य उत्तम छ भने मानिसले सबै कार्य गर्न सक्छ, प्रत्येक कार्यमा मानसिक र शारीरिकशक्ति लगाउन सक्छ । तर यदि स्वास्थ्यले साथ दिँदैन भने मानिसको जीवन एकप्रकारले व्यर्थ बन्छ ।

हत्केलामा स्वास्थ्यरेखाको उद्गम कुनै पनि स्थानमा हुन सक्छ । तर एउटा कुरा निश्चित हो कि यसको समाप्ति भने बुध पर्वतमा नै हुन्छ । कैयौँपल्ट यस्तो पनि देखिएको छ कि कुनै एउटा रेखा प्रारम्भ भएर बुध पर्वततिर आउने प्रयत्न त गर्छ तर बुध पर्वतमा भने पुग्न पाउँदैन । यस्तो स्थितिमा त्यस रेखालाई स्वास्थ्यरेखा भन्न सकिन्न । कुनै पनि रेखालाई स्वास्थ्यरेखा त तब मात्र मान्न सकिन्छ जब त्यसले बुध पर्वतलाई स्पर्श गरेको हुन्छ वा बुध पर्वततिर पुगेको हुन्छ । केही रेखाहरूले बुध पर्वतलाई स्पर्श मात्रै गरेको पनि देखिन्छ । यस्तो रेखालाई पनि स्वास्थ्यरेखा मान्नु पर्दछ ।

यो रेखा हत्केलाको कुनै पनि भागबाट प्रारम्भ हुन सक्छ । प्रमुखरुपले यसको प्रारम्भ निम्न स्थानबाट हुन्छ–

१. शुक्र पर्वतबाट २. जीवनरेखाको नजिकैबाट ३. हृदयरेखाबाट ४. चन्द्रपर्वतबाट ५. मणिबन्धबाट ६. भाग्यरेखाबाट ७. मंगल पर्वतबाट ।

माथि भनिए झैँ स्वास्थ्यरेखाको प्रारम्भ कतैबाट पनि हुन सक्छ तर त्यस रेखाको समाप्ति बुध पर्वतमा नै हुन्छ ।

यस रेखाको राम्रोसँग अध्ययन गर्नुपर्छ । हत्केलामा यो रेखा जति धेरै स्पष्ट, निर्दोष र गहिरो हुन्छ, सम्बन्धित व्यक्तिको स्वास्थ्य पनि उति नै धेरै श्रेष्ठ एवं उन्नत हुन्छ । उसको शरीर सुगठित र व्यक्तित्व प्रभावशाली हुन्छ । यदि हत्केलामा स्वास्थ्यरेखा टुटेको देखिन्छ भने वा काटिएको-फाटिएको, छिन्नभिन्न, लहरादारा वा जन्जीरजस्तो छ भने त्यस व्यक्तिको स्वास्थ्य कमजोर हुन्छ । जीवनमा उसलाई कुनै पनि प्रकारको कुनै आनन्द रहँदैन । व्यक्तिको हत्केलामा स्वास्थ्यरेखा स्पष्ट हुनु अति धेरै जरुरी हुन्छ ।

केही हत्केलामा स्वास्थ्यरेखाको अभाव भएको पनि देखिन्छ । यस सम्बन्धमा मेरो यस्तो अनुभव छ कि स्वास्थ्यरेखा नहुनु पनि आफैँमा शुभ संकेत हो । जसको हत्केलामा स्वास्थ्यरेखा हुँदैन ऊ स्वस्थ, आकर्षक र आनन्ददायक जीवन व्यतीत गर्ने हुन्छ । यस्तो व्यक्ति कुनै पनि प्रकारको रोगबाट टाढा हुन्छ, आफ्नो पुरुषार्थको बलमा सबै कुरा गर्न तयार हुन्छ ।

जसको हत्केलामा यो रेखा चौडा हुन्छ, जीवनभरि उसको स्वास्थ्य कमजोर रहन्छ । यदि यो रेखा कडीजस्तै जोडिएको छ भने जीवनभरि पेटको रोग रहन्छ । यदि लहराजस्तै यो रेखा माथितिर बढेको देखिन्छ भने अवश्यै मुटुको रोग लाग्छ । यस रेखाको पहेँलोपनले यो पुष्टि गर्छ कि यस्तो व्यक्ति जन्डिस वा रगतसित सम्बन्धित रोगबाट पीडित रहन्छ । स्वास्थ्यरेखामा जति धेरै बिन्दु हुन्छ, उसको स्वास्थ्य उति नै धेरै खराब रहन्छ । यदि कसैको हत्केलामा स्वास्थ्यरेखा कैयौँ ठाउँबाट काटिएको छ भने यस्तो मानिस जीवनभरि रोगी हुन्छ ।

यहाँ स्वास्थ्यरेखासम्बन्धी केही विशेष तथ्यलाई स्पष्ट गरिन्छ–

१. यदि स्वास्थ्यरेखा जीवनरेखासित मिलेको छैन भने यस्तो व्यक्ति दिर्घायु हुन्छ ।

२. स्वास्थ्यरेखा जति धेरै लामो, स्वस्थ र पुष्ट हुन्छ, त्यस

व्यक्तिको स्वास्थ्य त्यति नै धेरै श्रेष्ठ मानिन्छ ।

३. यदि यो रेखाको प्रारम्भ रातो छ भने जीवनमा हृदयरोग लाग्छ ।

४. यो रेखा मध्यमा रातो छ भने उसको स्वास्थ्य जीवनभरि कमजोर बनिरहन्छ ।

५. यदि यो रेखा अन्तिम स्थलमा रातो रङको देखिन्छ भने मानिसले पक्षघातको सामना गर्नुपर्ने हुन्छ ।

६. यो रेखा यदि रङ्गीचङ्गी देखिन्छ भने व्यक्तिले जीवनमा पक्षाघातको सामना गर्नुपर्ने हुन्छ ।

७. यो रेखा पहेँलो रङको छ भने व्यक्तिलाई गुप्त रोग लाग्छ ।

८. यदि स्वास्थ्यरेखा चन्द्र पर्वतबाट भएर हत्केलाको किनारै किनार भएर बुध पर्वतमा पुग्छ भने उसले कैयौँपल्ट विदेश यात्रा गर्दछ ।

९. यदि यो रेखा पातलो र स्पष्ट छ र मस्तिष्क रेखा पनि पुष्ट छ भने त्यस व्यक्तिको स्मरणशक्ति अत्यन्तै तीब्र हुन्छ ।

१०. यदि यस रेखा तथा मस्तिष्क रेखामा दाग छ भने व्यक्ति जीवनभरि रोगी हुन्छ ।

११. यदि हत्केलामा स्वास्थ्यरेखा सुर्ख रङको छ भने यस्तो व्यक्ति आवश्यकताभन्दा बढी भोगी तथा कामी हुन्छ ।

१२. यदि मस्तिष्क रेखा कमजोर छ अथवा स्वास्थ्यरेखा लहरादार छ भने उसलाई पेटको रोग भइरहन्छ ।

१३. यदि बुध पर्वतमा यो रेखा आएर काटिएको छ भने यस्तो व्यक्तिलाई पित्तदोष हुन्छ ।

१४. यदि यो रेखा रातो रङको भएर हृदयरेखाबाट बढ्छ भने उसको हृदय अति नै कमजोर छ भन्ने बुझ्नुपर्छ ।

१५. यदि स्वास्थ्य रेखा हृदयरेखाले क्रसको चिन्ह बनाउँछ भने उसलाई मन्दाग्नि रोग लाग्छ ।

१६. यदि स्वास्थ्यरेखाबाट कैयौँ सहायक रेखा निस्केर माथितिर बढेको देखिन्छ भने यस्तो व्यक्तिको स्वास्थ्य अत्यन्तै राम्रो मानिन्छ ।

१७. स्वास्थ्य रेखा यदि लामो तथा लहरादार छ तर भाग्यरेखा कमजोर छ भने व्यक्ति दाँतको रोगी हुन्छ ।

१८. यदि स्वास्थ्यरेखा कमजोर छ र हृदयरेखा पनि कमजोर छ भने व्यक्ति दुर्बल मनोवृत्तिको हुन्छ ।

१९. यदि स्वास्थ्यरेखाको अन्तिम स्थलमा चतुर्भुज छ भने व्यक्ति दमको रोगले पीडित हुन्छ ।

२०. औंलाहरू यदि कोणदार छन् भने तथा स्वास्थ्यरेखा कमजोर छ भने व्यक्ति लकवाको रोगले पीडित हुन्छ ।

२१. यदि स्वास्थ्यरेखाबाट कैयौँ ससाना शाखाहरू तलतिर गएको छ भने त्यस व्यक्तिसित अतुलनीय धन हुन्छ ।

# गोलभेंडा

सर्वसुलभ, स्वदिष्ट एवं सस्तो फल गोलभेँडाको स्वादबाट त तपाईं हामी सबै नै परिचित छौं । तथापि यसको गुणबाट अनभिज्ञ रहँदा यसबाट प्राप्त गर्नुपर्ने यथेष्ट लाभबाट भने हामी वञ्चित नै रहेका हुनसक्छौं ।

काँचै पनि खान मिल्ने यस गोलभेँडालाई प्राय: तरकारीलाई स्वादिलो एवं लयालु बनाउनमा प्रयोग गर्ने गरिन्छ । यसका अलवा अचार एवं सूपको रूपमा पनि यसको प्रयोग गरिन्छ ।

काँचोमा यसको रंग हरियो हुन्छ, तर पाकेपछि यो रातो रंगको हुन्छ । केही गोलो, केही लाम्चो आकारको यस गोलभेँडामा फलाम तथा क्याल्सियमको पनि केही मात्रा रहेको हुन्छ । क्याल्सियम समावेश रहेका कारण यसले हड्डीलाई बलियो बनाउँछ र कमजोरी हटाउँछ ।

हानि नगर्ने लाभदायक फल भएकोले यसको उपयोग बच्चादेखि बूढासम्मले गर्न सक्दछन् । यसको नियमित सेवन गर्ने गर्नाले व्यक्ति कमजोर हुँदैन, शरीर बलशाली हुन्छ र रगत उत्पादन हुन्छ । यसले शरीरको पाचन प्रणाली ठीक बनाउँछ । भिटामिन 'ए', 'बी' र 'सी' को मात्रा अत्यधिक रहेको यस गोलभेँडामा शरीरका लागि आवश्यक तत्त्व प्रोटिन, फस्फोरस, पोटास, गन्धक तथा क्लोरिन पाइन्छ ।

स्वादमा केही अम्लता बोकेको यस गोलभेँडाका विभिन्न औषधीय प्रयोगहरू पनि छन् ।

(क) आँखाको खराबीमा : आँखाको विकार, जस्तो रतन्धो तथा दृष्टिदोषमा गोलभैँडाले विशेष फाइदा पुऱ्याउँछ ।

(ख) छालाको रोगमा : धेरै प्रकारका छालाका रोगहरूमा गोलभैँडा उपयोगी साबित हुन्छ । यसको लगातार सेवन गरेमा छालाका रोगहरू नाश हुन्छन्, छाला नरम र चिल्लो बन्दछ, अनुहारको रंग रातो हुन गई कान्ति र स्फूर्ति बढ्दछ साथै शरीर हृष्टपुष्ट हुन्छ ।

(ग) पिसाबबाट चिनी जाने (मधुमेह) रोगमा : मधुमेहका बिरामीले

नित्य गोलभैँडा खाने गर्नाले यस रोगलाई नाश गर्न निकै सहयोग पुग्दछ ।

(घ) मस्तिष्क रोगमा : मस्तिष्कको रोगमा गोलभैँडाको रसले फाइदा पुऱ्याउँछ । लगातार प्रयोग गरेमा यसले दिमागको सुस्तपनलाई हटाई मानसिक थकाइ भगाउँछ । मष्तिस्कलाई सन्तुलित बनाई व्यक्तिको चिडचिडा स्वभाव हटाएर शारीरिक स्फूर्ति प्रदान गर्न समर्थ गोलभैँडा स्मरण शक्ति बढाउनमा पनि उपयोगी छ ।

बिर्सने बानी भएकाहरूले आफ्नो सम्झना शक्ति बढाउन गोलभैँडाको रस निकाली दिनको चार पटकसम्म प्रयोग गर्ने गरेमा अपेक्षित लाभ प्राप्त हुन्छ ।

(ङ) पाण्डु रोगमा : प्राय: केटाकेटीहरूलाई यो रोग लाग्दछ, कारण उनीहरू अज्ञानतावश माटो खाने गर्दछन् । यस रोगमा लिभरले आफ्नो कार्य राम्ररी गर्न सक्दैन, रगतको कमी हुन्छ । यसर्थ यो रोग लागेको खण्डमा गोलभैँडाको उपयोग गर्नु धेरै राम्रो हुन्छ । अक्सर लापरवाही गर्ने आमाबाबुका छोराछोरीहरू लुकीलुकी माटो खान थाल्दछन्, जसले गर्दा लिभर बढ्छ, पेट फुल्छ, पाचन शक्ति क्षीण हुन्छ र खाएको पिएको चिजको रस बन्न सक्दैन । ज्यादै थोरै मात्रामा रगत बन्ने हुनाले बच्चाको शारीरिक विकास राम्ररी हुन पाउँदैन ।

यसैले यस रोगबाट बचाउनका लागि बच्चाहरूलाई गोलभैँडाको सेवन धेरै मात्रामा गराउन आवश्यक हुन्छ ।

(च) कब्जियतमा : कब्जियत अर्थात् पेट सफा नहुनु नै सबै रोगको जड हो । गोलभैँडाले कब्जियत हटाउँछ अर्थात् पेट सफा गर्दछ । यसैले यसको नियमित सेवन गरी पेट सफा राख्नु एवं पाचनसम्बन्धी रोगबाट बच्नु बुद्धिमानी ठहर्छ ।

(छ) मोटोपन कम गर्नमा : बोसोको मात्रा अत्यधिक बढ्नाले शरीर मोटो हुन्छ, यस्तो अवस्थामा गोलभैँडाको नियमित प्रयोग गर्नु राम्रो हुन्छ । यसको सेवनले पेटमा व्याप्त रहेको विजातीय तत्त्वलाई गुदामार्गबाट बाहिर फ्याँक्न सहयोग पुऱ्याउँदछ ।

**जय गुरुदेव !**

## दिव्य गुरू महोत्सव

परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) यस धर्तीमा अवतरित हुनु भएको अंग्रेजी महिनाको २१ तारीखको पावन अवसरमा सिद्धाश्रम शक्ति केन्द्रले यस तारीखलाई दिव्य गुरु महोत्सवको रुपमा मनाउँदै आइरहेको छ। यसै क्रममा गत फाल्गुण ९ गते तदनुसार २१ फेब्रुवरी, २०११ का दिन बसुन्धरा आश्रममा उक्त कार्यक्रम सम्पन्न भयो ।

बिहान १०:१५ मा शुभारम्भ भएको कार्यक्रममा निखिल स्तवन, गोरक्ष स्तवनको सामुहिक रुपमा सस्वर पाठ, गुरू पादुका पूजन, गुरुमन्त्र जप, हवन, आवाहन भजन, आरतीको क्रमहरू सम्पन्न भएका थिए। उक्त कार्यक्रममा आरती संचालन केन्द्र सिनामंगल, गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमका कक्षा ६-७ का विद्यार्थीहरूले नृत्य प्रस्तुत गरेका थिए ।

आरतीपछि भजनकीर्तन, नृत्य, प्रवचन आदिका क्रमहरू रहेका थिए । प्रवचनको क्रममा सावरपन्थी साधक रामजी अर्यालले बोल्नुभएको थियो । उहाँले उक्त अवसरमा गत महिना सम्पन्न दुई दिवसीय शिविर कार्यक्रमलाई सफल बनाउन सहयोग पुऱ्याउने सबैलाई धन्यवाद ज्ञापन गर्नुभयो ।

## भगवान् शिव पूजन

परमपूज्य सद्‌गुरुदेवहरूको कृपा, अनुकम्पास्वरुप सिद्धाश्रम शक्ति केन्द्रले चाडपर्वका अवसरहरूमा सम्पन्न गर्दै आइरहेको पूजन कार्यक्रममा गत महिनाको १८ गते भगवान् शिवको पूजन सम्पन्न गरेको छ। महाशिवरात्रीको पावन अवसरमा सम्पन्न उक्त पूजनमा गणेश पूजन, गुरु पूजनपछि भगवान् शिवको विधिवत्‌रुपमा पूजन सम्पन्न भएको थियो ।

बिहान ८:०० बजे शुभारम्भ भएको उक्त पूजन कार्यक्रममा पूजन गर्ने सौभाग्य धनबहादुर लुङ्गेली मगर र मीना पुरीले प्राप्त गर्नुभएको थियो ।

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सम्पन्न हुँदै आइरहेका मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरू गत महिना निम्नानुसार सम्पन्न भए–

**केन्द्रीयरुपमा सम्पन्न हवन कार्यक्रमहरु**

फाल्गुण २ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००-९:०० बजे । फाल्गुण ३ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००-८:०० बजे । फाल्गुण ४ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००-९:०० बजे । फाल्गुण ५ गते बिहीबार– तान्त्रोक्त वगलामुखी हवन, वगलामुखी मन्दिर, पाटन, बिहान ८:००-९:०० बजे ।

**सम्पर्क कार्यालयहरुबाट**– फाल्गुण ४ गते बुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००-९:०० बजे। फाल्गुण ५ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००-९:०० बजे । फाल्गुण ३ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००-८:०० बजे । फाल्गुण ३ मंगलबार– तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००-८:०० बजे ।

**विद्याश्रम गतिविधि**

## अन्तरविद्यालय नृत्य प्रतियोगिता

गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमले सञ्चालन गर्दै आइरहेको अतिरिक्त क्रियाकलापको शृंखलाअन्तर्गत २०६७ फाल्गुण ६ गते अन्तरविद्यालय नृत्य प्रतियोगिताको आयोजना भयो । विद्याश्रम प्रांगण बसुन्धरामा आयोजित उक्त नृत्य प्रतियोगितामा शास्त्रीय तथा धार्मिक भावका नृत्यहरू मात्र समावेश गराइएका थिए। सद्‌गुरुदेवहरूको स्तुतिवन्दनाको साथमा बिहानको करीब ११:३० बजे शुभारम्भ भएको उक्त कार्यक्रममा ७ वटा विद्यालयहरूले प्रतियोगितामा भाग लिएका थिए भने आयोजकको रुपमा रहेको विद्याश्रमबाट प्रतियोगी समावेश गराइएको थिएन ।

वरिष्ठ चर्या नृत्य प्रशिक्षक श्री चन्द्रमान मुनिकारज्यू निर्णायकको रुपमा रहनुभएको उक्त प्रतियोगितामा नेपा डान्स एकेडेमी–प्रथम, माउण्ट समिट स्कुल–द्वितीय, एन्जेल्स वर्ल्ड इन्टरनेशनल स्कुल–तृतीय भएका थिए भने माउण्ट गौरीशंकर स्कुलले सान्त्वना पुरस्कार पाएको थियो ।

# तालिम तथा प्रशिक्षण कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रले मासिकरुपमा संचालन गर्दै आइरहेको कार्यकर्ता प्रशिक्षण तथा तालिम कार्यक्रम गत महिनाबाट पुनः शुरु भएको छ । गत फाल्गुण महिनाको २१ गते गुरुसेवा दलको तालिम तथा प्रशिक्षणबाट उक्त कार्यक्रम पुनः शुरु भएको हो ।

ऐतिहासिक जिल्ला गोरखामा सम्पन्न उक्त कार्यक्रम करिव १२:३० मा शुरु भएको थियो । कार्यक्रमको शुभारम्भमा स्वागत मन्तव्य दिँदै गुरुसेवा दलका सदस्य शकुन्तला तिमिल्सिनाले आश्रममा आएको सकारात्मक परिवर्तन नै सबैका लागि ऊर्जाको स्रोत हुने विश्वास दिलाउनु भएको थियो ।

उक्त कार्यक्रममा गुरुसेवा दलका सदस्य साधक हरि भट्टराईले आश्रमलाई अघि बढाउनु पर्ने कुरामा जोड दिनुभयो । उहाँले संस्थागतरुपमा दह्रोपनको आवश्यकतामाथि पनि जोड दिनुभयो । गत माघ २२ र २३ गते सम्पन्न अन्तर्राष्ट्रिय साधना शिविर एवं अभिनन्दन कार्यक्रमबाट माताजीले आश्रमलाई सुरक्षितरुपमा अवतरण गरिदिनु भएको कुराको स्मरण गर्नुहुँदै उहाँले अब यस अवतरणलाई कायम राख्नुपर्ने बताउनु भयो ।

कार्यक्रममा संयोजक विन्देश्वरी वरालल अहिले तपस्या गर्ने समय आएको स्मरण गराउनुहुँदै आश्रमको दोस्रो जन्म भएको बताउनु भयो । गत समयमा भएको बिग्रिएको अवस्था भनेको आश्रमको लागि पानी परेपछि बनेको सफा वातावरणजस्तै हो भन्नुहुँदै उहाँले तालिम कार्यक्रम आफैँमा दिव्य एवं ऐतिहासिक भएको बताउनु भयो । उहाँले शिष्यधर्ममा बस्नु सबैभन्दा ठूलो कुरा भएको र व्यक्तिको अहंभावले नै पतन हुनेतर्फ सबैलाई सचेत पार्नुभयो । आश्रममा जस्तो गुरु-शिष्य परम्परा हुर्केको संस्था विश्वमा नै अरू नभएको कुरा पनि गर्वको विषय भएको बताउनु भयो । उहाँले प्रशिक्षणको दौरानमा भन्नुभएको थियो, 'यही अद्वितीयताले गर्दा गत सम्पन्न शिविरमा माताजीहरू सिद्धाश्रम शक्ति केन्द्रसित सहकार्य गरेर अघि बढ्न रुचाउनु भएको छ ।' माताजीहरूले पनि सद्गुरुदेवहरूको कृपा, अनुकम्पा आश्रममा रहेको अनुभूति गर्नुभएको छ, उहाँले बताउनु भएको थियो ।

उहाँले गुरुदेवहरूले दिनुभएको चारवटा विभाग यथावत रहेको बताउनुहुँदै अध्यात्म तथा दैवीशक्ति विभाग र प्रचारप्रसार तथा संगठन विभागमा संयोजक खाली भएको हुनाले सावरपन्थी साधक रामजी अर्याललले अध्यात्म तथा दैवी शक्ति विभाग हेरिरहनु भएको र आफूले प्रचारप्रसार विभाग हेरिरहेको पनि बताउनु भयो ।

यस अवसरमा विभिन्न जिल्लाका सम्पर्क कार्यालयहरूमा गुरुसेवा गर्ने प्रशिक्षार्थीहरूले आ-आफ्नो जिल्लाको स्थितिबारेमा प्रकाश पार्नुभएको थियो । सबै जिल्लामा स्थिति अति नै सकारात्मक रहेको र संस्थाका लागि जग्गाहरू प्राप्त हुने अवसरहरूका बारेमा जानकारी दिइनुका साथै आश्रमको जग्गाको विषयमा उठेका कानूनी अड्चनमाथि पनि आफ्नो आदेश संस्थाको पक्षमा परेको जानकारी पनि उक्त अवसरमा प्रशिक्षार्थीहरूले गराउनु भयो ।

कार्यक्रममा सावरपन्थी सदस्य साधक रामजी अर्याललले आध्यात्मिकताको अभावमा उच्चतामा पुग्न अप्ठ्यारो हुने भएकोले यसलाई बुझेर आध्यात्मिकताका साथ अघि बढ्नुपर्ने आवश्यकता औँल्याउनुभयो । उहाँले विभिन्न परीक्षाहरू पार गर्दै आउने दिनहरूमा अघि बढ्नुपर्ने बताउनु भयो ।

उक्त कार्यक्रम साँझ ४:०० बजेसम्म चलेको थियो । कार्यक्रममा चुड्का भजनलगायत नृत्यहरू पनि सम्पन्न भएका थिए । गोरखा दरवार क्षेत्रमा रहेको आश्रम भवनमा भएको उक्त तालिम तथा प्रशिक्षण कार्यक्रममा काठमाडौँ, भक्तपुर, ललितपुर, गोरखा, पोखरा आदि जिल्लाबाट प्रशिक्षार्थीहरू सहभागी हुनुभएको थियो ।

## जाँदा जाँदै

भर्खरै सवाकरोड मन्त्रजपको अखण्ड महाअनुष्ठान अभूतपूर्वरुपमा सम्पन्न भएको छ । यस महाअनुष्ठानको सफलतासँगै सिद्धाश्रम शक्ति केन्द्रले लगातार दुइटा कार्यक्रमहरुलाई अभूतपूर्व र ऐतिहासिकरुपमा सम्पन्न गर्ने सौभाग्य प्राप्त गरेको छ । यो सबैका लागि अति हर्षको विषय भएको छ ।

गत माघ महिनामा पनि सिद्धाश्रम शक्ति केन्द्रले अन्तर्राष्ट्रिय साधना शिविर र पूजनीय गुरुमाताको अभिनन्दन कार्यक्रमलाई भव्य एवं ऐतिहासिक रुपमा सम्पन्न गरेको थियो । यसको रौनक सेलाउन नपाउँदै सम्पन्न यस महाअनुष्ठानबाट सिद्धाश्रम शक्ति केन्द्रले धेरै ठूलठूला कार्यक्रमहरु सफलतापूर्वक आयोजना गर्ने महान् कार्यमा आफूलाई सधैं अघिल्लो पंक्तिमा उभ्याएको छ । यस केन्द्रले भविष्यमा पनि थुप्रै कार्यक्रमहरुलाई सम्पन्न गरेर नवीन इतिहासहरु रच्ने क्रममा आफूलाई सधैं अघि अढाउने नै छ ।

संस्थाले आयोजना गर्ने कार्यक्रमहरुको सफलता यसका कार्यकर्ता साधकसाधिकाहरुको कार्यमा निर्भर हुने गर्दछ । कार्यकर्ता साधकसाधिकाहरुको जोश, जाँगर, हौसलामा नै कुनै पनि कार्यक्रम टिकेको हुन्छ । कार्यकर्ता साधकसाधिकाहरुको खटाइ, उनीहरुको बुझाइ र गराइले नै कार्यक्रमको दिव्यता र भव्यता झल्किरहेको हुन्छ । भौतिक आपूर्तिले मात्रै कार्यक्रम सफल पार्न सकिने होइन । यस्तो हुँदो हो त कैयौं धनाढ्यहरुले ठूलठूला कार्यक्रमहरु सम्पन्न गरिसक्ने थिए । सिद्धाश्रम शक्ति केन्द्र गर्व गर्दछ ती कार्यकर्ता साधकसाधिकाहरुप्रति जो कुनै पनि कार्यक्रमको आयोजनामा सदा जोश, जाँगर, हौसलाका साथ गुरुकार्यमा खट्न तयार हुन्छन्, सदा आफ्ना स्वार्थलाई गौण गरेर संस्थाको स्वार्थमा चुर्लुम्म डुब्छन् । यस्ता कार्यकर्ता साधकसाधिकाहरुको यस्तो गुरुभक्ति, गुरुकार्यप्रतिको आशक्तिले गर्दा नै संस्थाले धेरै कार्यक्रमहरुलाई सम्पन्न गर्न सकिरहेको छ ।

मूलतः सिद्धाश्रम शक्ति केन्द्र कार्यकर्ता साधकसाधिकाहरुले भरिएको एउटा फूलबारी हो जहाँ धेरै प्रकारका फूल फुलेका छन्, जसको सुगन्ध पाएर संस्था चारैतिर सुवासित भइरहेको छ, संस्थाले आफ्ना कार्यक्रमहरुलाई सम्पन्न गरेर समाजलाई लाभान्वित तुल्याउन सफल भइरहेको छ । संस्थाका आध्यात्मिक कार्यक्रमहरुलाई अटुट र निर्विघ्नरुपमा सम्पन्न गर्ने गराउने क्रममा कार्यकर्ता साधकसाधिकाहरुको अमूल्य योगदानलाई कहिल्यै पनि बिर्सन सकिन्न । सिद्धाश्रम शक्ति केन्द्र वास्तवमा बिर्सनै नसकिने कार्यकर्ताहरुको एउटा विशुद्ध आध्यात्मिक संस्था हो ।

संस्थाले परमपूज्य सद्गुरुदेवहरु श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, आशीर्वादस्वरुप आगामी जेष्ठ महिनामा गुरु गोरखनाथको चरणकमलमा आठौं सवा लाख रोट अर्पण महोत्सव आयोजना गर्दैछ । रोट अर्पण कार्यक्रममा कार्यकर्ता साधकसाधिकाहरुको खटाइ, अनुशासन, भावभक्तिको सबैतिर प्रशंसा हुने गरेको छ । यसपालिको रोट महोत्सवमा पनि कार्यकर्ता साधकसाधिकाहरुको ती नै चिरपरिचित, सुवासित कार्यशैली हेर्न पाउनेमा सबै ढुक्क छन् । गुरु योजनामा खट्ने यस्ता मूर्धन्य कार्यकर्ताहरुलाई साधुवाद !

अस्तु ।

१-५: फाल्गुण महिनामा सम्पन्न दिव्य गुरु महोत्सव। ६-९: फाल्गुण महिनामा उपत्यकाका विभिन्न स्थानमा सम्पन्न मासिक हवन कार्यक्रमहरु। १०-१३: फाल्गुण २१ गते गोरखामा सञ्चालित गुरुसेवा दलका लागि तालिम एवं प्रशिक्षण कार्यक्रम। १४-१५: विद्याश्रमद्धारा आयोजित अन्तरविद्यालय नृत्य प्रतियोगिता

गो.हु.का.द.नं. ६२/०६७/६८ का.जि.द.नं. ७०/०५६

- After a glorious six years of completion, now GNJDV is in its 7th year.
- A complete school with the blessing of Sadgurudevs for modern education in spiritual environment where students learn not only the bookish knowledge but also the moral norms and values.
- Montessori based primary classes.
- A school for your child's multi dimensional development through different ECA-CCA, indoor, outdoor programs plus spiritual stuffs.
- Frequent special counseling programs by child psychologists.

**Admission Open**
for
**PLAYGROUP TO VIII**

**Special Package for Boarders**

**HURRY UP !**
Limited Seats Only

Basundhara, Chakrapath, Kathmandu, Tel: 01-4355737, 4355789